# राष्ट्रिय गान



सयौं थुँगा फूलका हामी, एउटै माला नेपाली
सार्वभौम भई फैलिएका, मेची-महाकाली।।

प्रकृतिका कोटी-कोटी सम्पदाको आँचल
वीरहरूका रगतले, स्वतन्त्र र अटल।।

ज्ञानभूमि, शान्तिभूमि तराई, पहाड, हिमाल
अखण्ड यो प्यारो हाम्रो मातृभूमि नेपाल।।

बहुल जाति, भाषा, धर्म, संस्कृति छन् विशाल
अग्रगामी राष्ट्र हाम्रो, जय जय नेपाल।।

# सरस्वती वन्दना !!



या कुन्देन्दुतुषारहार धवला या शुभ्रवस्त्रावृता ।
या वीणा वरदण्डमण्डित कराः या श्वेत पम्मासना ।।

या ब्रह्माच्युतशंकरः प्रभृतिभिर्देवैः सदा वन्दिता ।
सा माम् पातु सरस्वती भगवती निःशेषजाड्यापहा ।।

## प्रकाशन समिति



**संरक्षक:**

दीर्घ राज जोशी



**प्रधान सम्पादक:**

रुकेश मचामसी



**संयोजक तथा सम्पादन:**

भरत खत्री

# प्रकाशकिय

नेपाली बिद्यार्थीहरुको साझा चौतारीको रुपमा रहेको सोनसिकले इतिहासमै ऐतिहासिक पुस्तक " सोनसिक साहित्य संग्रह " निकाल्ने निर्णय गऱ्यो । सोनसिक १८ औं कार्यसमितिमा सोनसिकको २००४ देखिको यात्रामा साहित्य विधा नभएकाले यसपटक यसलाई सुरुवात गरिने निर्णय गरियो । जसको मुख्य उद्देश भनेको नंया पुस्ताका लेखकहरुलाइ प्रोत्साहन गर्नु र पुराना लेखकहरुलाइ संमान गर्ने र नेपाल तथा अन्य कुनै बहिरी मुलुकमा बसोबास गर्ने नेपाली जसले आफ्नो पुस्तक निकाल्ने सपना देखिरहेका हुन्छन् तर आर्थिक अभाव तथा विविध कुराहरुको समस्याहरुले गर्दा पुस्तक निकाल्न पाइरहेका हुदैनन् । ऊनीहरुका अमुल्य रचनाहरुलाई स्थान दिने मनसायले हामीले यो पुस्तकको परिकल्पना गरेका हौं । यो पुस्तक भित्र विभिन्न विधाका लेख रचनाहरु पढ्न सक्नु हुन्छ, जस्तो कविता, मुक्तक, गजल, लघुकथा, निबन्ध इत्यादी विविध रचनाहरु पढ्न सक्नु हुनेछ । नेपाली साहित्यका दिग्गज तथा नंया लेखकहरुले निकै मार्मिक ढङ्गले आफ्ना लेखहरु लेख्नु भएको छ । पक्कै पनि यो पुस्तक पढी सकेपछी फरक-फरक व्यक्तिहरुका फरक-फरक बिचार, चिन्तन, कबिता, गजल, मुक्तक एकमा अनेक कुराहरुको स्वादपान गर्न पाउनु हुनेछ | जस्तो कि फरक भूगोल, फरक परिवेश र फरक मान्यता राख्ने लेखकहरुले आफ्ना लेखहरु राख्नु भएकाले केही भिन्न अनुभव हुन्छ भन्ने आसा राखेका छौँ । हाम्रो यो शुरूवात भबिष्यमा कोसे ढुङ्गाको रुपमा रहनेछ भन्ने पनि आसा लिएका छौँ | साहित्य विधाको यत्रो ठुलो जिम्मेवारी निर्बहन गर्ने अवसर दिएकोमा सोनसिक १८ औ कार्यसमिति प्रति आभारी छौं | सर्वाधिकार लेखकमा सुरक्षित रहने र लेखकका विचार पनि उनकै व्यक्तिगत हुनेहुदा यसमा सोनसिकको कुनै अबद्ता रहने छैन |

# अध्यक्षको कलम बाट

## हामी सबैको आशा, सोनसिक सबैको साझा

- दीर्घ राज जोशी



साहित्य समाजको ऐना हो, समाज रूपान्तरणको लागी साहित्य एक सकारात्मक प्रयत्न पनि हो | कोरियामा अध्यनरत नेपाली विद्यार्थीको साझा संस्था नेपाली विद्यार्थी समाज दक्षिण कोरिया (सोनसिक) २००४ मा स्थापना भए देखि नै निरन्तर रचनात्मक कार्य गर्दै आइरहेको छ | खेलकुद, साहित्य, सांस्कृतिक, शैक्षिक सेमिनार तथा अनेकौँ विविध कार्य मार्फत कोरिया, नेपाल तथा विदेशमा रहनु भएका धेरैलाई जोड्ने प्रयत्न निरन्तर गर्दै आइरहेको छ | विशेष गरि नेपाली संस्कृति कोरियन समाजमा तथा यहाँ रहेका अरू विदेशी समाज माझ पुर्याउन सोनसिकले निरन्तर कार्य गरिरहेको छ | सोनसिक, कोरियामा रहेका २७०० बढी नेपाली विद्यार्थीहरू, अनुसन्धाता तथा प्राध्यापकहरू र हजारौं पूर्व विद्यार्थीहरू, जो आज देश-विदेशमा छरिनु भएको छ सबैको साझा संस्था हो | सबैलाई समेट्न सक्ने गरि सोनसिक १८औ कार्यसमितिले, "हामी सबैको आशा; सोनसिक सबैको साझा" तथा "सबै प्रति सम्मान र विनम्रता; सोनसिक साझा हाम्रो प्रतिवद्धता" जस्ता विनम्र भाव लिई कार्य गरिरहेको छ | सोनसिक १८औ कार्यसमितिले पहिलो चोटि साहित्य उप- समिति निर्माण गर्यो | र म यो संस्थाको अध्यक्ष भएकाले पनि अत्तयन्तै खुशी छु, कि सोनसिकले पहिलो चोटि "सोनसिक साहित्य संग्रह" जस्तो ओझियो कार्य प्रारम्भ गरेको छ | यस कार्यमा सहयोग पुर्याउनुहुने सबैमा हृदय देखि नै धन्यवाद भन्न चाहन्छु | उत्कृष्ट साहित्य जहिले पनि मानिसको अन्तरहृदयबाट प्रस्फुटित हुन्छ | आफ्ना रचना पठाई सहयोग गर्नु हुने सबै सर्जकहरूमा हृदय देखि नै आभारी छु | धेरै जसो नौजवान युवाहरूले आफ्नो अन्तरहृदयबाट निस्किएको साहित्यिक ज्वार-भाट उतार्नु भएको छ | उहाँहरु सबैलाई आगामी दिनको साहित्यीक यात्राको धेरै-धेरै सुभकामना, लेखनमा अझै निखारीदै जानु होला | मलाई आशा छ, धेरैलाई जोड्न सक्ने यस्तो रचनात्मक कार्य आगामी सोनसिक कार्यकालले पनि निरन्तरता दिने छ |

# संयोजकको कलम बाट

## साहित्य मेरो जीवन हो,
## हरेक दिनको थकान मेट्ने औषधि हो ।



भरत खत्री
संयोजक तथा सम्पादक
साहित्य समिति, सोनसिक

नेपाली बिद्यार्थीहरुको साझा चौतारीको रुपमा रहेको सोनसिकले इतिहासमै ऐतिहासिक पुस्तक " सोनसिक साहित्य संग्रह " निकाल्ने निर्णय गऱ्यो । सोनसिक १८ औं कार्यसमितिमा सोनसिकको २००४ देखिको यात्रामा "साहित्य विधा" नरहेको र यस विषयमा पहिलो बैंठलमा छलफल भइ यसलाई गठन गर्ने भन्ने छलफल भयो । छलफल अनुसार यसको संयोजक मलाई राख्ने निर्णय भयो | जसमा सदस्यहरु सम्झना ढुंगाना, प्रभाकिरण बिष्ट, रुकेस मचामसी र कृष्ण रानाभाट रहनु भयो । सबै नयाँ अनुहारहरु सङ्ग काम गर्न पाउँदा निकै उत्साहित थिए । तर जसरी समय अघिबढ्दै गयो त्यसरी नै कार्यव्यस्तताले गर्दा मैले हाम्रो पुस्तकको यात्रामा समय दिन पाइरहेको थिएन । सोनसिकका वर्तमान सभापति दीर्घ राज जोशी ज्यू निकै उत्साहित, उर्जाशील एवंम सकृय भइ, हाम्रो यात्रालाई गन्तव्यमा पुर्याउन अहोरात्र खटिएर, हामीहरुलाइ झगझगाउदै हौसला दिदै, कसैले नबनाएको बाटो हामी हाम्रो पालोमा बनाउनु पर्छ भन्नुभयो । जसले हामीलाई बिश्वास गर्दैन उनीहरुलाइ पुस्तक निकाली पुस्तक मार्फत जबाफ दिनु पर्छ भन्नू हुन्थ्यो । जसको कारण मैले पनि सधैं उत्साहित हुँदै काम गरिरहेको थिए । पछि रुकेस मचामसी निकै सकृय भइ हाम्रो इमेलहरु चेकगर्ने, इमेलको जबाफ फर्काउने काम गर्नु भयो । यो पुस्तक निकाल्नको लागि हाम्रो उपसमितिमा भएका अन्य सदस्य ज्यूहरुको नि महत्त्वपूर्ण भुमिका रह्यो । त्यसमा रुकेस जीको भुमिका निकै यादकार रहनेछ । भनिन्छ "यदि तिमी संसारलाइ परिवर्तन गर्न चाहान्छौ भने आफू परिबर्तन हुनु जरुरी हुन्छ" त्यसैले हामीले हाम्रो पुस्तक बाट समाजलाई के दियौं भन्दा पनि हामीले के सिक्यौं भन्ने शिक्षा लिन जरुरी छ । बाहिर बाट हेर्दा पुस्तक निकाल्न जति सजिलो र सहज लाग्छ, काम गर्दै जादा निकै चुनौतीहरु र अप्ठ्यारा बाटाहरु पनि हिड्नु पर्ने रहेछ । नयाँ पुस्तालाई पुस्तक पढ्न र लेख्न प्रती आकर्षक गर्ने ध्येयले हामीले कदरपत्रको पनि व्यवस्था गरेका छौ | नेपालका दिग्गज साहित्यकार ज्यूहरुलाइ हाम्रो साहित्य संग्रहमा आफ्ना रचना पठाउन आग्रह गरेका थियौं । जस अनुसार रचनाहरु पनि आए | पहिलो पुस्तक हाम्रो पालामा निकाल्न पाउँदा निकै खुसी एवंम उत्साहित छौं । हामीले सुरु गरेको यो यात्रा सधैंसधैं अमर रहोस् । धन्यवाद !






नेपाली राजदूतावास, सिओल
Embassy of Nepal, Seoul
주한 네팔 대사관, 서울

२०७८।०६।१३

Ref No. :२०७८।६९

## शुभकामना सन्देश

नेपाली विद्यार्थी समाज (सोनसिक), दक्षिण कोरिया {Society of Nepalese Students in Korea (SONSIK)}द्वारा पहिलो पटक "सोनसिक साहित्य संग्रह" नामक पुस्तक प्रकाशन गर्न लागेको कुरा सुन्न पाउदा मलाई खुशी लागेको छ । यस उपलक्ष्यमा सोनसिक परिवारलाई म नेपाली राजदूतावास र साथै मेरो आफ्नो व्यक्तिगत तर्फबाट समेत हार्दिक बधाई तथा शुभकामना व्यक्त गर्न चाहान्छु ।

साहित्यलाई समाजको दपर्णको रुपमा लिईन्छ र समाजमा भएका र हुने विभिन्न क्रियाकलापहरुलाई प्रतिबिम्वित गरेको हुन्छ । साहित्यले समाजका नकारात्मक प्रवृतिलाई हटाई सकारात्मक धारणाको पुष्ट्याई गरी समाजको उत्थान र उन्नयन गर्न मद्धत गरेको हुन्छ । साहित्यका विभिन्न विधा कथा, कविता, निवन्ध, मुक्तक, उपन्यास, लेख आदिबाट देशको भाषा र संस्कृतिलाई समेत उत्तोरोत्तर प्रगतिका पथमा डोर्‍याई अन्तर्राष्ट्रिय जगतमा देशको छवि उजिल्याउने कार्य गर्ने समेत क्षमता राख्दछ ।

यसै परिप्रेक्ष्यमा सोनसिक १८ औं कार्यसमितिले तय गरेको नारा "हामी सबैको आशा; सोनसिक सबैको साझा" तथा "सबैप्रति सम्मान र विनम्रता; सोनसिक साझा हाम्रो प्रतिबद्धता ले कोरियामा रहेको नेपाली विद्यार्थीहरुको हकहितको संरक्षणमा महत्वपुर्ण योगदान पुग्ने छ भन्ने आशा गर्दै यस साहित्यसंग्रहले नेपाली भाषा, संस्कृति र सृजनशीलतालाई नयां उच्चाईमा पु-योस भन्ने शुभेच्छा प्रकट गर्न चाहान्छु साथै पहिलो पटक प्रकाशन हुन गइरहेको यस "सोनसिक साहित्य संग्रह" पाठकहरु माझ पठनीय र संग्रहनीय हुने विश्वास लिएको छु । धन्यवाद ।

(राम सिंह थापा)

कार्यबाहक राजदूत

Tel : (02)3789-9770~1 Fax : (O2) 736-8848 www.kr.nepalembassy.gov.np
Email : eonseoul@mofa.gov.np, nepembseoul@yahoo.com, nepembseoul2015@gmail.com
19, 2 gil, Seonjam-ro, Seongbuk-gu, Seoul [02823]

# हार्दिक शुभकामना

दक्षिण कोरियामा बसेर उच्च शिक्षा अध्ययन गरिरहेका नेपाली विद्यार्थीहरुको सामुहिक प्रयासले आफ्नो भाषा, साहित्य र मातृभूमिका लागि केही सिर्जनशील र सेवामूलक कार्य गर्ने उद्धेश्यले गठन भई लामो समयदेखि क्रियाशील रहेको " नेपाली विद्यार्थी समाज दक्षिण कोरिया " सोनसिकले विदेशमा समेत नेपाली भाषा-साहित्यको प्रवर्द्धन र प्रचार-प्रसार गर्न "सोनसिक साहित्य सङ्ग्रह " नामक पत्रिका प्रकाशन गर्न लागेको थाहा पाउँदा असाध्यै खुसी लागेको छ। सुरुसुरुमा कामको खोजीमा मात्र नेपालबाहिर गएका नेपालीहरुले नेपालबाहिर प्रवर्द्धन गरेको नेपाली भाषाले आज संसारका अरु भाषा सरह आफ्नो स्थान मजबुत गरिसकेको तथ्य छर्लङ्ग छ । आज रोजगारीको लागि मात्र होइन, ज्ञान, विज्ञानको खोजी गर्न, सीप सिक्न र शिक्षा आर्जन गर्ने सिलसिलामा समेत ठूलो सङ्ख्यामा नेपाली युवाहरु विश्वका विभिन्न देशमा छन् । विश्वका विभिन्न देशमा पुगेका नेपालीहरुले ती देशहरुमा आआफ्ना संघसंस्था बनाएर सङ्गठितरुपमा नै स्वाभिमानीपूर्वक नेपाली भाषा र साहित्यको प्रवर्द्धनमा ठूलो योगदान गरिरहेका छन् । त्यसैकारणले पनि आज नेपाली भाषाले संसारका अरु भाषा सरह उन्नति र प्रगतिको फड्को मारेको छ। विकासक्रमको सुरुवातमा भुटान, म्यान्मार र भारतका विभिन्न राज्यमा मात्र आफ्नो प्रभुत्व जमाउन सकेको नेपाली भाषा-साहित्यले आज विश्वभरि नै आफ्नो स्थान मजबुत बनाइरहेको गौरव हाम्रा सामु छ। यही सिलसिलामा दक्षिण कोरियामा अध्ययनरत सिर्जनशील विद्यार्थी साथीहरुको प्रयास नेपाली भाषा - साहित्यका लागि प्रशङ्सनीय छ। उहाँहरुले विश्वमा छरिएर रहेका नेपाली लेखक, कवि र साहित्यकारहरुका रचनाहरुको सङ्कलनका रुपमा प्रकाशन गर्ने सोनसिक साहित्य सङ्ग्रहले अवश्य पनि नेपालबाहिर नेपाली भाषा साहित्यको प्रवर्द्धन र प्रचार प्रसारमा ठूलो भूमिका खेल्नेछ भन्ने कुरामा म पूर्णत विश्वस्त छु। सोनसिकमार्फत आफ्नो भाषा-साहित्य र मातृभूमि नेपालको स्वाभिमान उचो गर्न लाग्नु भएका सोनसिकका वर्तमान अध्यक्ष श्री दीर्घ राज जोशीलगायत सबै साथीहरुलाई हार्दिक धन्यवाद सहित यो साहित्य सङ्ग्रह नेपाल बाहिरको नेपाली भाषा-साहित्यको विकासमा एक कोसेढुङ्गो साबित होस् भन्ने शुभकामना व्यक्त गर्दछु।

**रामलाल जोशी**
मदन पुरस्कार लेखक
धनगढी, नेपाल

# सङ्ग्रहणीय बनोस् सोनसिक साहित्य संग्रह

सन् २००४ देखि नेपाली भाषा र संस्कृतिलाई स्थानीय कोरियाली मात्र होइन, अन्य विदेशी विद्यार्थी माझ प्रचार र प्रसार गर्दै आएको नेपाली विद्यार्थी समाज दक्षिण कोरिया (सोनसिक) ले यसपटक साहित्यिक सामग्री भएको विशेष पुस्तक प्रकाशन गर्न लागेको थाहा पाउँदा अपार हर्ष लागेको छ ।

कोरियामा नेपाली श्रमिकका रुपमा मात्र होइन, अध्ययन र अनुसन्धानमा पनि सक्रिय छन् भन्ने सन्देश सम्पूर्ण विश्वमा छर्न सोनसिक लगातार सफल भएको छ । करिब २ हजार ६ सय विद्यार्थी, शिक्षक, अनुसन्धानदाता एवं प्राध्यापकहरुको यो संस्थाले सुरुदेखि नै नेपाली भाषा र संस्कृतिलाई महत्व दिएर आफ्ना गतिविधि गरिरहेको छ । प्रारम्भिक अवस्थामा नेपाली विद्यार्थी, शिक्षक र अनुसन्धानदाताहरुको कडा मेहेनती स्वभाव देखेरै कोरियाली सरकारले नेपाली श्रमिकलाई विशेष स्थान दिएको कुरा यहाँ स्मरण गर्नु मैले आफ्नो कर्तब्य पनि ठानेको छु । यसरी श्रमका लागि कोरिया पुगेका हजारौं नेपाली श्रमिकका रुपमा पुगे पनि त्यहाँ विभिन्न सिर्जनात्मक काममा लागेका देखिन्छन् । यसको श्रेय पनि कुनै न कुनै रुपमा सोनसिकलाई जान्छ । एउटा संस्थाको प्रभाव कसरी आफ्ना समुदायमा पर्छ भन्ने यो गतिलो उदाहरण पनि हो ।

सोनसिक कोरियामा अध्ययन-अध्यापन गर्ने विद्वान नेपालीहरुको संस्था भए पनि यसले कोरियाबाहिर रहेका नेपालीहरुलाई पनि निरन्तर समेटेर आफ्ना कार्य गरिरहेको छ । प्रत्येक वर्ष अध्ययन-अनुसन्धानका लागि नयाँ नयाँ विद्यार्थीहरु थपिरहने यो प्रकृतिको संस्थालाई निरन्तरता दिनु र सधैँ सिर्जनात्मक कार्यमा लागिरहनु कठिक काम हो । तर नेतृत्व परिवर्तन भइरहे पनि यसले आफ्नो उद्धेश्यमा कहिल्यै विचलित भएको देखिएन । यो सोनसिकको अनौठो विशेषता हो । म आफैं पनि विद्यार्थीका रुपमा जापानमा अध्ययन गरेको र जापानमा अध्ययनरत विद्यार्थीहरुको संस्थासँग आबद्ध भएको आधारमा भन्नसक्छु, कोरियामा अध्ययन-अध्यापनरत गरिरहेका हजारौं नेपालीलाई एकाबद्ध बनाएर सिर्जनशील कार्यमा लाग्नु-लगाउनु निकै कठिन काम हो । यसमा पनि साहित्य सिर्जनालाई पुस्तकका रुपमा प्रकाशन गर्ने प्रयास गर्नु अझ चुनौतिपूर्ण काम हो । यहि चुनौतिपूर्ण कार्य गर्न लागेको थाहा पाउँदा मलाई अपार हर्ष लागेको छ ।

सोनसिकको १८ औं कार्यसमितिले कोरियालाई मात्र होइन, विश्वभरि छरिएर रहेका नेपालीलाई जोड्ने कडिको रुपमा नयाँ नारा पनि बनाएको रहेछ । 'हामी सबैको आशा, सोनसिक सबैको साझा' नाराले अध्ययन-अनुसन्धानमा मात्र होइन, विश्वभरि छरिएर रहेका सबै विद्यार्थी र प्रवासी नेपालीलाई समेट्न खोजेको महसुस भयो । यो पवित्र नाराका लागि अन्तर्राष्ट्रिय नेपाली साहित्य समाजको तर्फबाट अध्यक्षका नाताले हार्दिक बधाई ज्ञापन गर्दछु । त्यसबाहेक सबै प्रति सम्मान र विनम्रता, सोनसिक हाम्रो प्रतिवद्धता' नाराले फलेको वृक्षको हाँगो निहुरिन्छ निरन्तर' भन्ने विशेष पङ्तिको याद गराएको छ ।

सोनसिक सबैको साझा भएको प्रमाण यसले प्रकाशन गर्न लागेको 'सोनसिक साहित्य संग्रह' को फराकिलो नीतिले पनि बताएको छ । यसमा संसारभरि छरिएर रहेका सर्जकका रचना अटाउने योजनाको अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज हृदयदेखि स्वागत गर्दछ । यसका साथै आफ्ना सदस्यहरुलाई स्तरीय रचना पठाएर यसमा स्तरीय सामग्री प्रकाशन गर्न आफ्नो तर्फबाट पनि सहयोग गरेको छ । नेपाली साहित्यमा यो सङ्ग्रहको विशेष स्थान रहने विश्वास गर्दै यो पूजनीय कार्य गरेकोमा सोनसिकको कार्यकारी टिम विशेषगरि अध्यक्ष दीर्घराज जोशीलाई हार्दिक धन्यवाद ज्ञापन गर्दै यो कार्यले निरन्तरता पाउने विश्वास एवं शुभकामना व्यक्त गर्दछु ।

**प्रकाश पौडेल 'माइला'**
अध्यक्ष अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज ( अनेसास )
केन्द्रीय कार्यसमिति




**गैर आवासीय नेपाली संघ, राष्ट्रिय समन्वय परिषद, दक्षिण कोरिया**

**엔아르엔에 코리아**

**NRNA KOREA**


Ref: KR21028-1 Date: 2021/10/28

**शुभकामना संदेश**

दक्षिण कोरियामा नेपाली बिधार्थीहरुको एक मात्र साझा संस्था नेपाली बिधार्थी समाज दक्षिण कोरिया (SONSIK) ले पहिलो पटक 'सोनसिक साहित्य संग्रह' नामक पुस्तक प्रकाशन गर्न लागेको खबरले हर्षित भएको छु।

नेपाली बिद्यार्थीहरुका दु:ख र अनेकन अप्ठेराहरुको समाधान गर्दै आपसमा दुख सुख साट्दै एक कुशल अभिभावकिय भुमिका निर्वाह गर्दै आईरहेको नेपाली विद्यार्थी समाज दक्षिण कोरियाले सुरुवात गरेको यस रचनात्मक कार्यको म मेरो व्यक्तिगत तर्फबाट निकै प्रशंशा गर्न चाहन्छु। आफ्नो स्थापनाकाल देखिने निरन्तर रचनात्मक कार्यहरु गर्दै आईरहेको सोनसिकको यस 'सोनसिक साहित्य संग्रह' पुस्तक प्रकाशनले अवश्य पनि संस्थाको गरिमालाई थप एक नया उचाई प्रदान गर्ने छ।

सदैव समाजको प्रतिबिम्बका रुपमा रहिरहने साहित्य र यससंग सम्बन्धित गतिविधिहरुले समाजका हरेक व्यक्तिहरुलाई एक आपसमा जोडिरहन उल्लेखनिय भूमिका निर्वाह गरिरहेको हुन्छ। व्यक्ति, समाज, राष्ट्र हुदै सारा संसारको वर्तमान सामाजिक, राजनीतिक, आर्थिक, मानसिक अवस्थाको चित्रण गर्दै साहित्यले त्यहाँ भित्रको भविष्य परिवर्तनसम्ममा भूमिका खेल्न सक्दछ। मलाई लाग्दछ यस पुस्तक प्रकाशनका लागि भएका गतिविधिहरुले धेरै नेपालीहरु एक आपसमा जोडिने अवसरको सिर्जना भएको छ। संसारको जुनसुकै ठाउँमा भएपनि हाम्रो राष्ट्र र राष्ट्रप्रतिको भावनाहरु यस पुस्तकमा भेटिने छन्। कोरियामा रहेका नेपालीहरुले देखेका र भोगेका हरेक विषय वस्तुहरुको साहित्यीक प्रस्तुतिमा यस पुस्तकबाट अनुभव गर्न पाईने छ।

अन्त्यमा, दक्षिण कोरियामा रहेको नेपाली बिधार्थीहरुको एक मात्र संस्था नेपाली बिधार्थी समाज दक्षिण कोरिया (SONSIK)ले प्रकाशन गर्न लागेको 'सोनसिक साहित्य संग्रह' पुस्तक प्रदेशबाट नेपाली कला, साहित्यमा एक महत्त्वपूर्ण कोशेली बन्न सकोस साथै आगामी दिनहरु यस्तै रचनात्मक कामका लागि प्रेरणाको स्रोत बनिरहोस हार्दिक शुभकामना। साथै, सोनसिकका हरेक रचनात्मक कार्य गतिविधिहरुमा गैर आवासीय नेपाली संघ, राष्ट्रिय समन्यव परिषद, दक्षीण कोरियाको सदैव साथ रहिरहने छ।

धन्यवाद।

**दिपक पुन**
**अध्यक्ष**
**गैर आवासीय नेपाली संघ,**
**राष्ट्रिय समन्यव परिषद,**
**दक्षीण कोरिया**

Deepak Pun
दिपक पुन
अध्यक्ष




"विद्यार्थीका लागी विद्यार्थी"

# नेपाली विद्यार्थी समाज जापान

NEPALESE STUDENTS' ASSOCIATION IN JAPAN (NESAJ)

在日ネパール人学生協会

ESTD.1997







## शुभकामना

स्थापनाकाल देखी नै दक्षिण कोरियामा अध्यनरत नेपालीहरुको साझा संस्था **नेपाली विद्यार्थी समाज दक्षिण कोरिया (सोनसिक)** ले विभिन्न कार्यक्रमहरु आयोजना गरि नेपाली बिद्यार्थीहरुको प्रतिभा प्रस्फुटन गर्दै आइरहेको रचनात्मक कार्य निकै प्रसंशनीय छ। यसै गरि सोनसिकको १८ औं कार्यसमितिले प्रकाशन गर्न लागेको "**सोनसिक साहित्य संग्रह**" ले विद्यार्थीहरुमा भएको रचनात्मक कलालाई थप उजागर गर्न सघाउ पुर्याउने छ भन्ने मलाई विश्वास लागेको छ।

आगामी दिनहरुमा पनि सोनसिकले दक्षिण कोरियामा अध्ययनरत नेपाली विधार्थीहरुको चौतर्फी विकासका लागी निरन्तर योगदान दिनेछ भन्ने आशाका साथै संस्थाको सुन्दर भविष्यको शुभकामना दिन चाहान्छु। साथै नेपाली भाषा, कला, संस्कृतिको प्रवर्धन गरि दक्षिण कोरिया र नेपालको द्विपक्षीय सम्बन्धको प्रगाढता अझ बढाई नेपाली पर्यटन तथा औधोगिक क्षेत्र विकासका लागी टेवा पुर्याउन यस संस्थाले अहम भुमिका खेल्ने विश्वास लिएको छु।

अध्यक्ष
अजय राना

Email:Nesajadmin@gmail.com/www.nesajapan.com

# सामग्री तालिका

# सामग्री तालिका

# सामग्री तालिका

# सामग्री तालिका

## विविध लेख रचनाहरु

# मुक्तकहरु

***तिल्ता मगर (अतीत)***
पाल्पा (हाल दक्षिण कोरिया)

१.

कहिलेकाहीँ भेट हुँदा नजर तरे पनि ठिक छ
हाँसो र खुशीहरु अन्तैतिर छरे पनि ठिक छ
मैले माया गर्छु भन्ने तिमीलाई यकिन हुनु पर्यो
बाँकी त मलाई माया तिम्ले नगरे पनि ठिक छ

२.

दुखै दुखको खानी बोक अनि बुझ्नेछौ
जहाँतहीँ नोक्सानी बोक अनि बुझ्नेछौ
दशौं किताब पढेर पनि जीवन बुझेनौ भने
दशपेजको राहदानी बोक अनि बुझ्नेछौ

३.

समयले बा लाई सेता केश दिएपछि
आमालाई थोत्रो चोली भेष दिएपछि
बाध्यतामा परदेश आएको हुँ हजुर
परिस्थितिले परदेश जा भन्ने आदेश दिएपछि

४.

यस्तै छ यहाँको हाल के गर्नुहुन्छ
पापी मन स्वार्थी चाल के गर्नुहुन्छ
पहिले माया जताई साथ दिन्छु भन्नेहरु
मुस्किलमा लाउँछन् काँडे पर्खाल के गर्नुहुन्छ

५.

बिर्सन खोज्यो झन् तिमीलाई सम्झन्छ
खोई किन यो मन तिमीलाई सम्झन्छ
घात प्रतिघातमा हत्याए पनि तिमीले
हुनै सक्दैन परिवर्तन तिमीलाई सम्झन्छ

६.

जे होस् तर इज्जतको ब्यापार गरिन्न
दुखे दुखोस् घाऊ अब उपचार गरिन्न
जस्ले जित्छ यो दिल उसैलाई दिन्छु
कि साथै आऊ नभए इन्तजार गरिन्

१.

तिम्रो बसाई सहरमा हुनाले
मेरो भने गाउँ घरमा हुनाले
मानवता मुल्यांकन गरिएन
सोँच जात र थरमा हुनाले

सफा चिटिक्क बस्ने तिमी
मेरो झुपडी खरमा हुनाले
साथ छोडी हिडिदियौ आज
म मुस्किल सफरमा हुनाले

*मेरो देश नै मेरो विश्व हो, विपना हो, मेरो सत्य हो , एउटै खँदिलो अस्तित्व हो - लक्ष्मी प्रसाद देवकोटा*

# मुक्तकहरु

*दिपक राज*
स.न.पा. 10, अर्घाखाँची
हाल दक्षिण कोरिया।



छौ कि यतै दायाँबायाँ लाग्न थालेको छ,
हौ कि कतै मेरै छाँयाँ लाग्न थालेको छ,
तिमीलाई बिर्सिएर नयाँ जीवन जिउँछु भन्थें,
तर आजकल अझ मायाँ लाग्न थालेको छ ।

आफ्नो त दिन पनि गनेरै जान्छन्,
कहिले यादमा पागल बनेरै जान्छन्,
कस्तो बदला लिन्छन् दिलमा बस्नेहरु,
न सोधी आउछन् न भनेरै जान्छन् ।

मनले कुभलो चिताउनु पहिले,
नतिजा खराब आउनु पहिले,
आफ्नो धरातल सधै याद राख्नु,
अरूलाई लात उज्याउनु पहिले

भए पनि बाधा अड्चन गजब लाग्न थाल्छ ।
जतिसुकै होउन उल्झन गजब लाग्छ थाल्छ ।
जे हुन्छ राम्रो हुन्छ हुनेछ भोली राम्रैको लागि
यसरी सोच्यौ भने जीवन गजब लाग्न थाल्छ।

# मुक्तकहरु

*तिल्ता मगर (अतीत)*
पाल्पा (हाल दक्षिण कोरिया)

**२.**

थरथर काँप्यौ   काँतर बन्यौ मायामा परिवार देखेर
के रोज्थ्यौ झुपडिको बास तिमी ठुला दरबार देखेर

क्या   खुब   कुरा गर्थ्यौ त मायाका पिरतीका तिमी
छोड्यौ साथ तोड्यौ सम्बन्ध आफ्नैको खबरदार देखेर

जानलाई   क्षितिजपारी   तिमीले बाहाना मिठो रच्यौ
धनको बाटो चुन्यौ पापी शक्तिहीन मलाई लाचार देखेर

सुख दुखमा सा दिने बाचा बिर्सिएर हरायौ प्रिय
पाईला उतै लम्काएछौ कठै मुल्यवान उपहार देखेर

खैर,के कुरा गरुँ माया पिरतीका अनि तिमी प्रियसीको
भयवित छु म अचेल बजारमा प्रितहरुको ब्यापार देखेर

**३.**

ठक्करसँगै बहने नदीको छाल भाकी छु
कहिल्यै नसुक्ने आँशुको ताल भाकी छु

तिमी जानु सगरमाथा शिखर चुमी आऊ
लर्बराए पाइला कछुवाको चाल भाकी छु

साँचे जस्तो हुन्न अरे हजुर महशुस गर्दैछु
घोटिएर खिइएका हलीको फाल भाकी छु

शिशिर हटाइ बसन्तमा रमाउनु तिमी प्रिय
उता तिमी पलायौ म यता पराल भाकी छु

यता सम्हाले उता भत्किए, उता सम्हाले यता
बेरिएर कतै अल्झिरहने म जाल भाकी छु

सबथोक लुटेर गयौ तिमी   मेरो बस्ती बाट
छहारी दिन नसक्ने एक्लो साल भाकी छु

के पाए मैले के गुमाए यो स्वार्थी संसारमा
केहो यो जीवन?खुद आफैमा सवाल भाकी छु

**४.**

क्याखुब मिठो माया दियौ आभार तिमीलाई
एकपलै सही बाहुमा लियौ आभार तिमीलाई

चुँडिएका रहर मेरा भत्किएका घर सपनाका
लथालिङ्ग ति रहर सियौ आभार तिमीलाई

बोझिलो जिन्दगीको भारी बोकेर हिँड्दा म
तिमी मेरो साथैमा   थियौ आभार तिमीलाई

कति सरल तिमी किन यति ईमान्दारिता???
ती   बोझ आफ्नै सम्झियौ आभार तिमीलाई

रङ्गिन चाहान्थे   म तिम्रो हरेक रङ्गहरुमा
मेरै यादमा तिमी तड्पियौ आभार तिमीलाई

ति मिठा पलहरु मेटाएर जाँदा ~जाँदै तिमी
रोकी कदम पछि फर्कियौ आभार तिमीलाई



# मुक्तकहरु

महेश विष्ट
चिप्रिङ 5 खोटाङ

कसरी कमाउने होला मैले धन तनाव बढेको छ
अशान्त रहन्छ अचेल यो मन तनाव बढेको छ
गरिब भएर जन्मनु गल्ती हैन गरिबै मर्नु गल्ती हो,
बिल गेट्सको यो भनाईले झन तनाव बढेको छ ।

पुर्व फर्कि पश्चिम चल्न, मलाई पनि सिकाइदेउ न
तिमी जस्तै ढाट्न,छल्न, मलाई पनि सिकाइदेउ न
हिजो जस्तो थिएँ म"त ~ त्यस्तै नै छु आज पनि ,
छेपारो झै रङ्ग बदल्न, मलाई पनि सिकाइदेउ न ।

आकाश छेड्न, पृथ्वी फार्न, तिमीले पनि सक्दैनौ होला
भविष्य देख्न र भूत सुधार्न, तिमीले पनि सक्दैनौ होला
फेरि केलाई यत्रो घमण्ड ?  गन्तव्य सबैको एउटै त हो ,
आएपछि काललाई पछार्न, तिमीले पनि सक्दैनौ होला ।



# मुक्तकहरु

सुशील अर्याल
वालिङ्ग १४, स्याङ्गजा
हाल:- दक्षिण कोरिया



१.

नगरी दया नराखी चेत कर लगाऊ सरकार।
बरु बेचौंला घर खेत कर लगाऊ सरकार।
अझै नी जनताको रगत चुस्न चाहान्छौ भने~
प्रार्थिव शरिरमा समेत कर लगाऊ सरकार।

२.

सत्य चरम गरिबीको रेखामुनी बाँचिरहेका छौं।
आँखाको आँशु आँखामै थुनि बाँचिरहेका छौं।
बिकसित देशले ग्रहमा बस्ति बसाएको शताब्दिमा-
हामीहरु भने ढुङ्गे यूगको  जुनी बाँचिरहेका छौं।

३.

नलेख्नुस  है  संवेदना  पत्र सरकारको बदनाम हुनेछ।
दु:खद खबर फैलिन्छ यत्रतत्र सरकारको बदनाम हुनेछ।
स्वदेशमै औषधि उपचार नपाएर मरें भने म-
कालगतिले मर्यो भन्दिनुस नत्र सरकारको बदनाम हुनेछ।



# मेरि प्रिया

*प्रभाकिरण बिष्ट, सुर्खेत*

**1.**

गराइदिइन बाच्नै मुस्किल मेरि प्रिया ले बनाइन जब पत्थर दिल मेरि प्रिया ले।

खुब चर्चा परिचर्चा गरेर पो टुङ्ग्याइ दि छन।

मेरो बर्बादि को महफिल मेरि प्रिया ले।

भोलि उस्को पनि कसरी नबनाउलिन भनु मेरो जस्तै अवस्था जटिल मेरि प्रिया ले ।

फेरि छोडी जाने जाने बेला किन बनाइन आखा भरी आँसु टिलपिल मेरि प्रिया ले।

**2.**

यात्री हिडेपछि नरोकिनुहोला कास फर्किनु पर्छ।

प्रदेशहो प्रिय तिमी मिल्न एक जुग पर्खिनु पर्छ।

यहाँ एउटा अस्ताउनु भनेको अर्को जन्मिनु हो।

संगै हिडेका यात्रीको बाटो मिल्दैन तर्किनु पर्छ।

एउटा अबोध बालक जस्तै हो मेरो देश नेपाल।

त्यस्तै बच्चालाई संस्कार पुगेन रत चर्किनु पर्छ।

**3.**

यो दिल हो मित्र निरन्तर खुशी हुन्छ दुखी हुन्छ।

भदौरैको भेल श्रावणको मेग जस्तो दर्किनु पर्छ।

यो तितो सत्यहो महोदय जिन्दगीको र समय को।

मेरो देश हो हजुर सोझा बेकसूर नै थर्किनु पर्छ।

**4.**

दुईवटा ठुलो पत्थरको बिचमा मुटु राखेर।
आउनुहोस हजुर पनि जानुहोस प्रदेशको स्वाद चाखेर।
कति सपना पहाडमा ठोकिय कति खोलाले बगायो
आउन त म पनि आयकोहु घरधितो राखेर बरपिपलु भाकेर।

**5.**

बुढी आमाले सन्ध्या हुदा सम्म दैलो खोल्नु भयन।
उहाँ गहिरो निन्द्रामा हुनुहुन्छ बोलाउदा बोल्नु भयन।
कसौंडीमा महि माग्ने हरुको लर्को देखिन्छ ढोका सम्म.
दिदा जोख्नै पर्ने धातु हो सुन,हिर हो जोख्नु भएन।

**6.**

मैले जे देखे जे भोगे तेहि भन्छु।
कहिले नोकर बन्छु मालिक बन्छु।
कान तीखो पारेर सुन त मेरो मित्र।
हेर्दा घुम्ने कुर्सीमा हुन्छु वारि खन्छु।

**7.**

हरेक रात सिरानी भिजेको हुन्छ सम्झनी बाट
के सन्देश सुनाउ म एक्लै छु हौरानी बाट।

सोध्छिन आमाले खाको छस कि छैनस छोरा

सिर्फ आसुका ढिक्का पाठाउछु राजधानी बाट।

*जो मानिस देवता देख्छ, त्यो मानिस स्वयम् देवता हुन्छ ।– बालकृष्ण सम*

# मेरो दृढ अठोट

*डीआर न्यौपाने 'सूर्य'*
कालीगण्डकी २ अर्बेनी,गुल्मी

यही हो मेरो दृढ अठोट अबदेखि
भ्रष्टलाई दिने छैन भोट अबदेखि

हिजो चोर डाँका सबको जय जय गरियो
देखाइदिनेछु एक एक खोट अबदेखि

उसलाई मोसो दलेर डाँडा कटाइदिऊँ
जसले दिन्छ निर्धालाई चोट अबदेखि

कति हिड्नु विदेशी वस्त्रको पछि लागेर
लगाउनेछु दौरा अनि कोट अबदेखि

धेरै हुर्के जात धर्मका विष वृक्षहरू
रोपौँ शान्ति र सद्भावको बोट अबदेखि




*कल्पना नै योजना हो । – महेन्द्र शाह*

# मरेर लानु के छ र ?

काजल जोशी

चाँदनी आहा चन्द्रमाको कतै दाग छ है नभन ।
डाक्टर बन पाईलट बन बधाई छ तर पहिला तिमी मानव बन ।।

मान्छेका जति रुप उति, पफ्रक पफ्रक छन् बिचार अनि ।
बुझ्दैनौँ सानो कुरा समान छैनन् हेर आफ्नै हातका औँला पनि ।।

कतै लड्छौँ धर्मको नाममा त कतै हिड्छौँ आफ्नै अभिमानमा ।
घुमी रहदा चक्रव्यूमा बिर्सेउ मानव तिम्रो यात्रा समशानमा ।।

अभिमानलाई ईमान सम्झ्यौ, बैमानी हेर गुणवान भईदियो ।
मान्छे ले मान्छे त्यागे त्यसैले त ढुंगा भगवान भईदियो ।।

झरी जाने पात हेर गलेर जान्छ एक दिन त शरीर ।
तेरो मेरो गर्दै बित्छ जीवन, बुझ्दैन् मान्छे किन गर्छ खै गुरुर ।

खुट्टाले भुई नछोडोस् प्रगतीले उडान भरोस् जहिल्यै ।
समयमै महत्व बुझेस् जीवनको, बगेको खोला पर्फिकन्छ र कहिल्यै ।।

आउ हात समाउ, ढुंगा होईन समाजलाई एक मन्दिर बनाई ।
भेदभाव त्याग प्रेम नै प्रेम भर आखिर मरेर लानु के छ र ।।



*शुक्रराज शास्त्री - भूल गर्नुपनि ज्ञान प्राप्त गर्नु हो ।*

# मलाई ताराबाजी मात्रै होइन...

*प्रतीक्षा खराल*

आमा, मलाई ताराबाजी मात्रै होइन अब तरवार बाजी पनि सिकाइदिनुस्
आमा, मलाई गाउन र नाच्न मात्रै होइन अब गिद्धेको खुट्टा भाच्न पनि सिकाइदिनुस् ।

आमा, मलाई तिहुन जुटाउन मात्रै होइन अब आवाज उठाउन पनि सिकाइदिनुस्
आमा, मलाई सहनशील भएर लजाउन र झुक्न होइन अधिकारका लागि नारा फुक्न पनि सिकाइदिनुस्।

आमा, धेरै सुनिसके मैले स्वस्थानी ब्रतकथा अब दुर्गाका कथा पनि सिकाइदिनुस्
आमा, सकिसके मैले अरुका लागि हाँस्न अब आफु स्वतन्त्र भएर बाँच्न पनि सिकाइदिनुस्।

आमा, मलाई सिता जस्तै पतिव्रता मात्रै होइन पासाङ जस्तै वीर बन्न पनि सिकाइदिनुस्
आमा, मलाई घाँस काट्न र आली गोड्न मात्रै होइन देशको बाटो खन्न पनि सिकाइदिनुस्।

आमा, बुझिसके म जस्तै को रहेछन् देउकी र झुमा भनेका
आमा, अब भन्नुस् न हेर्न मन छ तिमिलाई क्लारा र मलाला बनेको ।

आमा, सुन्दैछु व्यवस्था फेरियो अवस्था फेरिएन शासन फेरियो शोषण फेरिएन
त्यसैले निर्मला र भागीरथी रोएको टुलुटुलु हेर्ने होइन देशको मुहार फेर्न सिकाइदिनुस्।

आमा, लक्ष्मी सरस्वती पुज्नेले हामीलाई किन पुजदैनन् हाम्रा आकाङ्क्षाहरू किन बुझ्दैनन्
आमा, मलाई चरी जस्तै उड्न र सम्मानको बाटोमा गुड्न सिकाइदिनुस्।

आमा मलाई डोको नाम्लो भिर्न मात्रै होइन संसद भवन छिर्न पनि सिकाइदिनुस्
आमा, मलाई छाउपडी गोठमा रुन होइन अरुको मुस्कान हुन सिकाइदिनुस् ।

आमा, अलि समय लाग्छ रे पुर्ण समानता र न्याय पाउन, खै कहिले पाइन्छ
आमा, मलाई अब शिक्षासँगगै आत्मरक्षा तालिम पनि चाहिन्छ।

# मेरो देश                                                                 दलाल

सत्य भण्डरी, कञ्चनपुर

*Calvin university*

• **मेरो देश**

*जमिन छोडेर जहाज, मुलुक पुग्न अक्कासियो।*
*तिमी दिलमा झुन्डियौ, देश  आखामा झुन्डियो !!*
*हामी छोरा जन्मिएको, भब्य उत्सव मनाउदै छौ !*
*सोच्दै होला मालिकले, अर्को मजदुर जन्मियो !!*
*साठि नाघेको जिन्दगी, तिम्रो साथ मा परेको छ!*
*कलिलो जवानी जम्मै, कारखानामा निचोरियो !!*
*तहरा हुन्जेल पेट पाल्यो, छोराबुहारी रिझ्याएर।*
*तहरा मर्यो बुढो जिन्दगी, वृद्ध आश्रम लखेटियो!!*
*आगन नछाडेको छोरो, देश छोडि हिन्यो आज।*
*लाग्योबाआमालाई मुटुसग ढुक्ढुकि अलग्गियो!!*
*सोच्दै छु म मुनाले पनि खाडीको रहर गरिन अरे!*
*घर छेउकै करेसाबारि खन्जहर साहुको भेटीया !!*




• **दलाल**

*त्यो लुटेरा पनि देश लुटेर मालामाल बन्यो।*
*सोच्दैछु कस्तो बिचित्रको नयाँ नेपाल बन्यो !!*
*एकै नियतिका भएनन् एकै कोखमा सन्तान !*
*एउटा छोरो कुबेर बन्यो,, अर्को कंगाल बन्यो !!*
*भलो सोच्नेको कुभलो हुने रहेछ साथि।*
*जसलाई काधमा चढाए उहीं काल बन्यो !!*
*गाभिएका सिमानाहरु अवलोकन गर्दै थिए।*
*फेरि अाखामा कुमाउ बन्यो; गडवाल बन्यो !!*
*किन? बेचिदै, बेचिदै हिँडेको छस ए सत्य !*
*बता तेरो जिन्दगीमा को ? दलाल बन्यो !!*



*मन कालो भए संसार कालो हुन्छ – कवि शिरोमणि लेखनाथ पौड्याल*

# झुटा हैनन् | तिमी हिडिदियौ | खै नयाँ नेपाल

प्रकाश राज पाण्डेय
*Postdoctoral Researcher*
Jeonbuk National University

**शिर्षक: झुटा हैनन्**

बेहोसिमै बोलिएका बातहरु झुटा हैनन्
तिम्रा लागि फैलिएका हातहरु झुटा हैनन् !!

हुन्छन कोही स्वार्थीहरु माया प्रेमको नाम बेच्छन्
साँचो हो कि सम्बन्धका जातहरु झुटा हैनन् !!

रिसाइएला खुसाइएला भुल-अन्जानमा गाली पर्ला
सत्य कसम गरिएका संवादहरु झुटा हैनन् !!

सम्झिन लाई के को धुप बर्खा अनि साँझ बिहान
तिम्रै यादमा गुजारेका रातहरु झुटा हैनन् !!

करोडौंमा तिमीलाई गर्ने व्यवहार नै छुट्टै हुन्छ
काखा पाखा गरिदिने पक्षपातहरु झुटा हैनन् !!

चोट लाग्दा तिमीलाई दुख्छ यो मन बेसारी नै
सुख दु:खमा दिइने यि साथहरु झुटा हैनन् !!

**शिर्षक: तिमी हिडिदियौ**

तिमी सँग भेट भयो बोल्न नपाई हिडिदियौ
कसिएको मनको गाँठो खोल्न नपाई हिडिदियौ !!

भरिदैथ्यो तिम्रा लागि सुस्तरी यो मनको घैला
यै घैलाको चोखो माया डबोल्न नपाई हिडिदियौ !!

दुई पलको भेट हाम्रो के नै ठुलो आशा थ्यो र
फिजाएथें थोरै माया बाटोल्न नपाई हिडिदियौ !!

दह सरि मन भरि थुप्रीदैथ्यो थाहा छ तिमीलाई ?
देखिएको पधँरी भेल सम्हाल्न नपाई हिडिदियौ !!

खुबै आउथ्यो घुर्की धम्की सुरुवात नै थिएन जब
तिम्रो घुर्की अनि तिमी झेल्न नपाई हिडिदियौ !!

तिमी सँग भेट भयो बोल्न नपाई हिडिदियौ
मनको गाँठो मनभित्रै खोल्न नपाई हिडिदियौ !!!

---

**शिर्षक: खै नयाँ नेपाल**

जोडिहरु हजार देखें, तर मायाको अभाव भेटें
चौतारी सधैँको मेरो, तर छायाको अभाव भेटें !!

भोको थियो नाङ्गो थियो कठ्याङ्ग्रीएर मर्नलाको
लाखौं नजरहरु गुज्रे, तर दयाको अभाव भेटें !!

नाम त दियौ तिमीले कस्तो हो त्यो नयाँ नेपाल
चलन चल्ती उस्तै नै छ, खै नयाँको अभाव भेटें !!

जोडिहरु हजार देखें, तर मायाको अभाव भेटें
चौतारी सधैँको मेरो, तर छायाको अभाव भेटें !!!

# भेटौँ न हामी पनि तिम्रो साथ

प्रकाश राज पाण्डेय
Jeonbuk National University

**शिर्षक: भेटौँ न हामी पनि**

आक्क्ल झुक्कल मात्र किन सधै भेटौँ न हामी पनि
पिउन खोज्ने मनका तिर्खा लौ मेटौँ न हामी पनि !!

बाँसुरिको धुनमा उसको माया निरन्तर बग्दै छ अरे
हाम्रो दिलको सारङ्गी नि खै रेटौँ न हामी पनि !!

त्यो देउराली त्यो चौतारी डुल्छन अरे जोडिहरु
देउराली चौतारी भञ्ज्याङ समेटौँ न हामी पनि !!

आक्क्ल झुक्कल मात्र किन सधै भेटौँ न हामी पनि
पिउन खोज्ने मनका तिर्खा ल है मेटौँ न हामी पनि !!!

**शिर्षक: तिम्रो साथ**

जब तिम्रो साथ भयो सिंहासनको राज भयो
आकाश तल आफु माथि कस्तो असर आज भयो !!

नादान मुटु के थाहा लप्पन झप्पन् यसलाई
आज उफ्रीराछ बेइमान यसको भिन्नै लाज भयो !!

नशा छुन्थ्यो खुट्टा काँप्थ्यो छातिले केहि चालै पाएन
दिल नै खलबल परिदिने बिचित्रको मात भयो !!

जस्तो कर्म उस्तै फल भन्ने गर्छन तर खै
पगलपनको भेट पाइयो त्यस्तो के नै काज भयो !!

जब तिम्रो साथ भयो सिंहासनको राज भयो
आकाश तल आफु माथि कस्तो असर आज भयो !!!

# देश बनेको हेर्न चाहन्छु

## दीर्घ राज जोशी

जन्मियो बच्चा, दूधे बालक हुँदै युवा भयो
घरको गरिबीले, रोजी-रोटी जोड्न विदेश गयो |
पचास डिग्रीको, तातो बालुवा सँगै सपना बुन्दै
अहिले त, मोबाइल छ हातमा घरका वेदना सुन्दै ||
हो, म युवा देश बनेको हेर्न चाहन्छु,
आफ्नै जीवन कालमा देश फेरिएको देख्न चाहन्छु |

अलि मध्यम वर्गको म, पढ्न लेख्न पाए
उच्च शिक्षा लीन, विदेश सम्म पुग्न पाए |
पढी सकेर, देश बनाउँछु भन्दै फर्केर आए
न जागिर पाए, न सम्मान पाए फेरी विदेश आए ||
हो, म युवा देश बनेको हेर्न चाहन्छु,
आफ्नै जीवन कालमा देश फेरिएको देख्न चाहन्छु |

हाम्रै युवाहरू, विदेशको प्रयोगशालामा अनुसन्धान गर्दै
हाम्रै युवाहरू, हरेक दिन खाडी बाट लास बनी फर्किदैं |
हाम्रै युवाहरू, देशमै जिन्दाबाद मुर्दावादको नारा घन्काउँदै
माग पुरा गराउन, सडकमा टायर बाली आगो दन्काउँदै ||
हो, म युवा देश बनेको हेर्न चाहन्छु,
आफ्नै जीवन कालमा देश फेरिएको देख्न चाहन्छु |

कोही युवाहरू कोरिया-जापान छन्, भाषा पढ्न
देशमै सबै भए, किन आउथे अर्काको भाषा पढ्न |
जति दुख गरे पनि, म मेरै देश फर्किन चाहन्छु
श्रम-पसिना, आफ्नै माटोमा चुहाउन चाहन्छु ||
हो, म युवा देश बनेको हेर्न चाहन्छु,
आफ्नै जीवन कालमा देश फेरिएको देख्न चाहन्छु |

जुन देशका युवाले आफ्नो देशमा भविष्य देख्दैनन् त्यो देशको भविष्य कहिल्यै उज्जोल हुदैन |

# आखिरमा के ?

**सुन्दर बरुवाल**



अब त कोहि चाहिन्छ एक्लै,  काली सुहाएन
प्रेमको सागर तर्ने बेला,ओराली उकाली सुहाएन
लाली पाउडर फुलबुट्टे चोली लगाउँदा पनि,
दुइचुल्ठे कपाल बाटी सिउँदो, खाली सुहाएन॥

आउने आउँदै थिए, जाने पनि त जान्छ
छाड्नेहरुकै लागि किन मुटु धड्किन्छ?
यहाँ मायाको खिल्ली उडाइने चलन रैछ
यिनको जीवन एकदिन पश्चताप मै सकिन्छ॥

आफ्नै अघि काल आएको देखेको छु
नुनको साटो आँसु चोबि खाएको देखेको छु
तपाई रहरको कुरा किन गर्नुहुन्छ म संग,
बाध्यताको अघि रहरले पासो लाएको देखेको छु।

*Take up one idea. Make that one idea your life - think of it, dream of it, live on that idea. Let the brain, muscles, nerves, every part of your body, be full of that idea, and just leave every other idea alone. This is the way to success. - Swami Vivekananda*

# बताउन हे गुरु

*दीर्घ राज जोशी*

यो महामारीका बेला
नेपाल बाढी र डुवानमा भएका बेला
प्रत्यक्ष भेट्न नसक्ने बेला
भर्चुअल छ नि, हामी भन्छौ कसो न होला?
बताउन हे गुरू, सांस्कृतिक सांझ कस्तो होला?

सोनसिकको नयां समिति बनेका बेला
उपसमिति झनै प्रभावकारी भएका बेला
सल्लाहकारले उपयुक्त सल्लाह बर्साएका बेला
हामी भन्छौ कसो न होला?
बताउन हे गुरू, सांस्कृतिक सांझ कस्तो होला?

मन बाटै हारेको मान्छे, उठ्न सक्दैन कहिल्यै
जांगर मरेका संग, सकिदैन भन्ने बहाना हुन्छन् जहिल्यै
म लिन्छु नेतृत्व, समितिको साथ भए हुन्छ जहिल्यै
सोच्यौ, हुने नहुने कारण हेर्यौ अनि सुरू गर्यौ अहिल्यै
हामी भन्छौ कसो न होला?
बताउन हे गुरू, सांस्कृतिक सांझ कस्तो होला?

विहानै काममा गएका बेला
दिउसो घाममा सेकिएका बेला
सांझ थकानले लथरान्न भएका बेला
सांस्कृतिक सांझले जोश, जांगर, अनि हौसला देला
हामी भन्छौ कसो न होला?
बताउन हे गुरू, सांस्कृतिक सांझ कस्तो होला?

सहभागी मित्र, अग्रज, शुभचिन्तक सबै गुरू
आआफ्नो प्रतिभा देखाई लौ अब गरौ सुरू
आआफ्नो दायित्व निभाई लागौ खुरूखुरू
हामी भन्छौ कसो न होला?
बताउन हे गुरू, सांस्कृतिक सांझ कस्तो होला?

सोनसिक १८औ कार्यसमितिले पहिलो पटक भर्चुअल माध्यम बाट गर्न लागेको सांस्कृति साझको परिक्षण श्रींखलामा बाचित रचना

*खान पकाउँदा र खाँदा पनि असल कुरा सोच्ने बानी बसाउनुपर्छ– खप्तड स्वामी*

# बिगारेको हिसाब

*सम्राट बराल*

मृत्यु शैयामा आज एक भ्रष्ट तड्पी रहेको,
सुन्नासाथै ध्यान मेरो कस्तो तिमीमै गएको
छिर्दामा त कोठा आहा सजावट उम्दै छन्
लोभ जति गर ती केही छिनमै गुम्दै छन्
निल्यौ पुल सिङ्गै, स्वाहा उद्योग पनि बनायौ
महँगा अत्तर छर्कियौ त्यही पनि गन्हायौ
गाडी, बङ्गला, सुन चाँदीले मात्रका धनि भै
हक्दारका भीड बाहेक कोही देख्दिन म खै
सहानुभूतिको तागत तिमीले नपाउँदा
प्रतिरोधी क्षमता आफ्नै झन्झन् गुमाउँदा
गालिगलौज सत्तोश्रापले सधैँ नै लखेट्यो
उमेर भए पनि कुनै औषधिले नै भेट्यो ।
बाँचुन्जेल पनि त त्यस्तै अपार थ्यो पीडा
न त मनमा शान्ति भयो न त कुनै क्रीडा
पाँच वर्ष बन्धकको त झन् गरौँ के कुरा
श्रीमती नि मुख ढाक्दै, पीडामै तिम्रा भुरा
निस्कदा माला गलामा रत्तिए तिम्रा गाला
आरोप लगाउने भन्थ्यौ त्यो कहाँ पो जाला
भन्दै गर्जदै अनि त क्रोधले मुर्मुरिँदै
मनमनै आवेशका ज्वालाले झन् सुरिँदै
मुखमा कतिको ढक्कन तिमी लगाउँथ्यौ
बिगारेको हिसाब कसो गरी मिलाउँथ्यौ
न पाटी पौवा भवन न स्कुलै कीर्ति छाड्यौ
लोकको लुटेको सम्पत्ति घरभित्र बाँढ्यौ
कलंकैको टिका पुस्तौँ पुस्तामा सब बाँढ्यौ
पुर्खाको इज्जतको हरित सबै नै फाँड्यौ
गुमेको इज्जत अब नफर्किने प्रष्टै छ
तिमी गए नि तिम्रो नाम लोकमा भ्रष्टै छ
श्रद्धासुमन म अर्पण गरुँला जसरी
तिमीले लगेको सम्पत्ति गनुँला कसरी ।

**-इतिश्री-**

*सम्राट बराल*
फर्मासिष्ट
पोखरा, नेपाल
samratuses@gmail.com

# हामी सबैको आशा, सोनसिक सबै को साझा

दीर्घ राज जोशी

अग्रज गुरू, मित्रहरु सबैका शुझाव लिई
उठ्यौ हामी कार्यमा विनम्रताको झुकाव लिई।
सोनसिकले के दियो नभनौ साथि हो
सोनसिकलाई के दिए यो भनौ साथि हो।।

विगतका कार्यसमितिका राम्राकुरा पच्छ्याउदै
थप्दै छौ नयां आयाम सबैमा आशा बल्झाउदै।
सबैको आशिर्वाद, मायां अनि स्नेह लिदै छौ
आआफ्नो दायित्वलिई कार्यले हामी जोड्दै छौ।।

आशा अनि भरोसाले जगाई जोड्दै युवाहरु
खोज, आविस्कार अध्यनले बन्दै बैज्ञानिकहरु।
शिक्षा, साहित्य, खेलकुद, प्रविधिले पुग्दै छौ
सोनसिक नामले सबैलाई हामी जोड्दैछौ।।

उठ्यौ हामी सबलाई अब हामी जोड्दै छौ
अनेकौ कमजोरी सुधारी हामी अब उठ्दैछौ।
खोज अनि अनुसंधान पथमा लम्कदै
विश्व मानचित्रमा नेपाली सगौरव चम्कदै।।

*सोनसिक १८औ कार्यसमितिका लागी सबैलाई जोड्ने हेतुले रचित*

*योग सूत्रका प्रणेता पतञ्जलिको जन्म गोनर्द पवर्त सृङ्खला (अर्घाखाँची जिल्लाको ऐरावत क्षेत्र) मा भएको हो । – प्रा.डा. विष्णुराज आत्रेय*

# Meaning of Existence

***Shyam Gaire***

In sunny days, at the lap of mountain,
Birds were rest and singing song about fountain,
My sabbatical position searching art in Glacier Lake,
Blizzard shaking my long hair, sleeping woods awake,
When seventy-two dimensional cameras opened and capture appalling views,
At that time monk with falling sweat gave me news,
Travelers want to enjoy with the nature by touch,
& quot; Go inside me & quot; nature told us by laws,
On the shadow of wood and figure came out,
Rainbow with heavy rain from hill and birds were shout,
Farmers becomes fired with image by travelers and me,
They don’t give us resident and said & quot; what you see?& quot;
Fans and shaking of leaves wants to move,
If fans were off, green leaves moves yellow to prove,
Well wisher monk and surviving entity were friends,
" Limited source and unlimited desire & quot; are pandemic of our Brains

*We are what our thoughts have made us; so take care about what you think. Words are secondary. Thoughts live; they travel far. - Swami Vivekananda*

# मेरो अनुसन्धान

दीर्घ राज जोशी

जिवनका अनेक भोगाई संग
जब अनुसंधान भैदिन्छन् भंग।
तब कहां रह्योर बांकि उमंग
सुनौलो आशाले फेरि हुन्छु दंग।।

बिहानै उठ्यो, फेरि उहि सुरुवात्
फेल-फेल प्रयोग के गरु बात?
फेरि-फेरि अनगिन्ति सुरुवात्
सुर्य अस्तायो गरौला भोलिका बात्।।

पत्तै हुन्न विते यस्तै महिना आठ
फेरि उठ्यो उहि सुरु, बज्यो आठ।
फेलका गणना हेर्दा हजार आठ
नयां आशा बन्लान् कि सफल साठ।।

यस्तै अनेक भोगाईमा होलन् मित्रहरु
नेपाली बैज्ञानिक होलान् अझै जुझारु।
देशले फेर्ला कांचुली, गरौला अध्यन् देशमै
मिलुन् सबै, बनाऔ मुलुक रमाउला देशमै।।

सबैको जय होस्।
नेपाल आमाको जय।
२०७८/०४/२८



*लामो समय सम्म आफुले गरीरहेको अनुसंधानको नतिजा सोचे जस्तो नआएका बखत रचित।*

# मेरो सिर्जना र म !!

*अनुष्टुप कलानिधि दाहाल*

स्वास्नी फकाउने शब्द,शब्दमा हुन्न क्वै कवि
पद वैभव सुम्पेका नारीमा हुन्न क्वै कवि!
घुस्घुसे भित्रका दम्भ,शब्दमा हुन्न क्वै कवि
जम्मै हुन् कविता जादू तिलस्मीमा भए छवि!!

कुक्कुड कविता हुन्छ हुन्छन् कलम यी कवि
कसिङ्गर कुचा बन्छन् जानेमा कविता कवि!
टुप्पीमा कविता नाँच्छिन् जुम्रामा खेल्दछिन् कवि
कला उर्वरका स्वाद सङ्केतमा भए छवि!!

त्यत्तिकै कविता कैल्यै मुस्कुराउन्न ए,कवि
डाहा जलनको आगो बोल्दिनन् कविता कवि!
स्वार्थका नीचताभित्र जन्मन्नन् कविता कवि
उन्मुक्त उच्च उद्यान फूलमा हुन्छ यो छवि!!

प्यार जिस्कनुका शब्द,शब्दमा हुन्न क्वै कवि
चेपारे ओठका चाल ढालमा हुन्न क्वै कवि!
जम्मै हुन् कविता हुन्छिन् लयमाधुरकी धुन
कलापारख सर्वोच्च अन्तर्सङ्गीत गुञ्जन!!

सत्ताका भाटमा हुन्नन् कविता कहिल्यै कवि
सूचना उसको"बाल"टाँसी क्वै हुन्न हो कवि!
निरक्षर उचालेर भर्याङ हुन्न क्वै कवि
जम्मै हुन् कविता हाँस्छिन् कला बिम्ब बने छवि!!

बाइफाले लिऊँ भन्ने स्वाङमा हुन्न क्वै कवि
गुण्डाका साथ नाँचेका शब्दमा हुन्न क्वै कवि!
म हौं सर्वोच्च ठान्नेका दिलमा हुन्न क्वै कवि
जम्मैमा कविता हुन्छिन् भए सङ्गीतका छवि!!

लहरा कविता हवैन सुकेको रुख यो कवि
झारपात हुँदैहवैन मुस्कने कविता कवि!
इन्द्रणी कविता हवैन भान्साको यो धुवाँ कवि
जम्मै हुन् कविता सच्चा भए अन्तरका छवि!



*Give, even if you only have a little. -Buddha*

# नेपाल र नेपाली

## दीर्घ राज जोशी

ने मुनिना पालीतम्, नेपाल रह्यो नाम
सर्वच्च सिखरले, बढायो हाम्रो पहिचान ।
सस्कृत भाषा अनि, बेद पुराणकि जननि
शान्तिदुत, लाखौ विद्धावन जन्माउने आमा जननि ।।

ऋषि मुनिको तपोभुमि, मात्री भुमि हाम्रो पवित्र
देश प्रेममले हृदय भरिभराउ छ सबै नेपाली भित्र ।
ज्ञान, शील अनि एकताको मंत्र जपी हिड्नु छ
विश्व मानचित्रमा सुन्दर, सान्त अनि समृद्ध नेपाल चिनाउनु छ ।।

जुन माटोले वुद्ध, जनक अनि भृकुटि जन्मायो
भानुभक्त, लेखनाथ अनि लक्ष्मि प्रसाद हुर्कायो ।
ईतिहांस सांक्षि छ देश मेरो कति धनि थियो
निरास छैनौ हामी फेरी एक नम्वर बन्ने हो ।।




माटोले माग्ला त्याग जब, तयार छौ देश भक्त
अन्याय, अत्याचार सहन्नौ, हामी छौ शसक्त ।
देश हाम्री आमा हुन्, टेक्न दिन्नौ बैरिलाई
सस्कृति देशको प्राण हो, लुट्न दिन्नौ कसैलाई ।।

स्वभिमानि राष्ट्र हाम्रो, सबै भाषा भाषीको
द्रुत गतिमा हुन्छ विकाश अब, आयो संविधान नेपालको ।
विश्वभर छरिएर मिलिजुलि बसेका छौ गोर्खाली
सर्व कार्यमा सिद्ध अनि चनाखा हामी नेपाली।।

*नेपाली राजदुतावास सउलद्धारा २०१६ मा संविधान दिवसको अवसरमा आयोजीत साहित्य वाचन कार्यक्रममा दुतावासकै प्रांगणमा बाचना गरीएको*

# पिताजीको अर्ती

सुर्य बिक्रम गिरि

प्रशस्त धनको बृद्धि भए देखि नमात्तिनू
दु:खले कष्टले घेरे शत्रु लागे नआत्तिनू ।
कुराले मह झैं अर्ती दिने कोही भए पनि
अरुका गफमा लागि नहिड्नू कहिल्यै पनि ।
सम्पत्ति धनले अर्को अघि बढ्दै गयो भनी
धुरी चढ्न नखोज्नू है अरु घोडा चढे भनी ।
जो जो सँग यहाँ उच्च ज्ञान विद्या विवेक छ
परिवार त्यही राम्रो सुखी सम्पन्न बन्दछ ।
ज्ञानी बन्छन् तपस्याले कर्मले बन्दछन् धनी
ठूला धनाढ्यका पुत्र बन्न सक्दछ निर्धनी ।
खहरे भल झैं हैन समुद्र झैं बने तिमी
क्षणिक सुखमा हैन रमाए दु:खमा पनि ।
लोभले साँगुरो हुन्छ सधैं मानिसको मन
ईज्जत राख्नका लागि खर्च गर्नू बरु धन ।
मान्छे ठूला बनेका हुन् आचरण विचारले
ऐले ठूला बनेका छन् विज्ञापन प्रचारले ।
आदर अरुको गर्नू आफू आदर पाउन
प्रशंसा अरुको गर्नू आफू चिन्न चिनाउन ।
रिस र द्वेष इर्ष्याले रगत बिष बन्दछ
उपकार दया गर्ने ज्ञानी र स्वास्थ बन्दछ ।



# गैरजिम्मेवार नेता

## दीर्घ राज जोशी

ए दाई कता?
ए भाई, म त नेता
दिनभरी गफ गर्यो, ठेक्का पट्टा मिलायो
एक अर्काको खेदो खन्यो,
काम गर्ने फुर्सदै छैन
त्यहि भएर भाई म त नेता ।

दाई म जस्तो ईमानि चै के त?
कुनै राजनितिक संगठनको झोले बन्दैनौ
काममा ध्यान दिन्छौ
आर्काका राम्रा कुराको मात्रै चर्चा गर्छौ
नकारात्मक आलोचना टिप्पणी गर्दैनौ
सामाजिक सस्थामा काम गर्छौ
समितिका मान्छेलाई गफ हैन कामले उत्तर दे
उ भन्छौ
समितिका साथिलाई काममा लगाएर हैरान ब
नाउछौ
भ्रष्टाचार गर्दैनौ
सस्थामा तन मन धनले लाग भन्छौ
को दिन्छ आफ्नो पैसा?
झोले भन्दै हाम्रो खेदो खन्छौ
अनि को लाग्छ भाई तिम्रो पछाडि?
तिम्रो उज्वल भविष्य नेपालमा चै छैन है भा
ई।

दाई, तपाईले बोक्ने सिद्धान्त चै के?
हरेक वर्ष पार्टि फेर्छौ
गुट फेर्छौ
सस्था फेर्छौ
नजिककैको सहकर्मी फेर्छौ
तपाई कस्तो नेता दाई?
भाई, हो त्यहि भएर त म नेता
गुट मिल्न पर्छ, अनि पो बार्गेनिङ् चल्छ
मन्त्री बनिन्छ, पैसो आउछ
अनि कार्यकर्ता नि रमाउछन्, दुई चार मिडिया किनिन्छ
अनि हाम्रा नराम्रा कामपनि महान कार्य भन्दै चर्चा हुन्छन्
ब्यापारी ठेकेदारलाई समितिमा ल्याउने
सबै मिलेर देश लुट्ने
आफ्ना विरोधिको तथानाम गाली गर्ने
आफु जित्ने भए, चुनाव गरीहाल्ने
नत्र कार्यकाल लम्याउने
हार्ने जस्तो भए मत पत्र च्यात्ने
धादली भयो भन्ने आदि आदि
बुझ्यौ भाई त्यहि भएर त म नेता।

फेरि बुझिन नि दाई?
चुनावका तपाईका धोषणा चाहि के त?
जनता संगका बांचा चाहि के भए?
कहिले काहि लाज लाग्छकि नाई दाई?

ए भाई, धोषणा पो गरेको त, कसम नै खाएको त छैननि
झन म त ईश्वरलाई नि मान्दिन
पाप धर्म नै रहेन, एस्तै चल्छ
काम अलिअलि गर्ने
प्रतिपक्षिले गर्दा, गर्न सकिएन भन्ने
हुदै गर्छ, भैहाल्छनि भन्ने
अनि अर्को चुनावमा अधुरा काम पुरा गर्न मलाई नै जिताउ
भन्ने, त्यहि भएर त म सदाबहार नेता भाई

भो दाई, म नेता बन्दिन
नेता भनेकै तपाई जस्तो हो भने
नेता शब्दमा नै घृणा लाग्न थाल्यो
तपाई जस्तो गैरजिम्मेवार पात्र देखेर
देशको हालत के होला, चिन्ता लाग्यो
युवाको भविष्य के होला?
विदेशीयका दाजुभाई को भविष्य के होला?
तपाईका सल्लाह मैले ग्रहण गर्न सक्दिन
ईमानको जिवन जिउछु, निश्वार्थ सक्ने सेवा गर्छु
हो दाई म नेता हैन, पहिला ईमानि नागरिक हुं।

# Choosing ME

*Rukesh Machamasi*

For You,
Here are Sultans constructing Taj Mahals
With a single signal of yours
Here lie many Romeos ready to leave the world
For your one smile
For your one glance
Many would shed tears praying God almighty
Many would leave money diamond, ruby.

However,
You chose me
Which itself is sad
Which itself is unluck
With only tiny home, even that inside the heart
I can't build Castles,
Yor dream of a happy home with me.
Leaving the one who would leave everything,
You are talking of leaving world for me.

I too, want some bends in your Lips
I too, want glitters in your eyes
But I am afraid
I might give tears and cry
I might bring eclipse in eyes.
Still, you say, I am Yours.
To make your world brighter, warmer,
Still today, here are many Prometheus
Daring to steal Fire from Olympus.
But you chose the darkness,
You chose the dim light
Here are many
Wishing you spell their name with love
Here are they, waiting to hear you sound.
However, you chose my name
You shouted, chanted my name with love
With noise,

thank you for choosing me...

Contd...

# Choosing ME

*Rukesh Machamasi*

But here I am,
Acting of becoming deaf, deaf.
And I have become Deaf.
Here are many Cuckoos singing
Spring, winter, summer, autumn
So, you could listen to them
Here are many songs, poems written
Ever letter, word, verse
Here is much music composed
Every tune sweet, soft
But you make yourself deaf to them
You chose my heartbeat for your ears
You chose my sound for your tone.
The sad thing is,
I sound like Crow, not Cuckoos.
My words can't be crafted into poems
They are harsh, bad, strong.
Still, you find softness in them.
You chose my words.
In millions dream at midnights,
you dance in their dreams
Stealing their dreams,
you make them uneasy in their sleep.
But you sleep to have me in your dream

# MY UNEXPRESSED LOVE

*Santosh Sah*
*Bara, Nepal*

The moment which u spent with someone if it comes to your heart increasing your palpitation, think it is beginning of love.

we're born alone, we live alone, we die alone.

only through our love, we can create an illusion for a moment that we're not alone.

In the memory of someone............

When u come closer and closer to me the world gets paused as if the time has turned relative for me.

whenever I look into your eyes, it seems stars twinkling in the far away constellation of the universe somewhere in the cosmos.

I wish I could discover the formulae to freeze the time and keep looking into your eyes to solve the mystery of dark matter which has a resolution in your eyes.

I wish I could travel the time and reach to the past to take the glimpse of your smile.

I wish I were a satellite revolving around your orbit day and night.

The parachute of your smile seems as if it were the first formed atoms of the Nebular sky.

I believe I'll meet u as a planet tries...



# गरिबी र अशिक्षा

*Sirjana Luitel* , Duhabi Sunsari

हे मेरी आमा आजको युगमा शिक्षा नै मीठो छ ।
टुहुरो गरिब छैन नि चामल कोदाको पिठो छ ।।१।।

अगेना छेउ ओदाना माथी फलामे कराईमा ।
उम्लेको पानी माग्दै छ पिठो गरिबको घरैमा।
आमा गरिबको घरैमा ।।२।।

भोक भन्दा भोजनै मीठो यस्तै छ घरमा ।
त्यही खाना खाई स्कुल जान्छु मान्दिन शरम ।
आमा मान्दिन शरम ।।३।।
सानैमा छँदा जानुभो बाबा यो संसार छाडेर ।
यी जन्मदाता जननीलाई बिधुवि पारेर ।।४।।

सँगैका साथी स्कुल जान्छन् सटबुट लाएर ।
गरिबको बच्चा घरैमा बस्छु खोले नुन खाएर।
आमा खोले नुन खाएर।।५।।
लान्थ्यौ है आमा माहाजनका घरमा पिठ्युमा बोकेर।
यो छोरीलाई पठाउछु भनी हिम्मत ठाकेर ।
आमा हिम्मत ठाकेर ।

ऋण माग्न जाँदा ऋण दिन्न भन्छन् ति पापी साहूले
के गर्नु हजुर टुहुरो बनाई जानु भो बाबाले ।
आमा जानु भो बाबाले ।।६।।

फाटेको चोलो खकालि भिरी लाएको देखेर ।
म ठूलो हुने इच्छा त थियो पढेर लेखेर ।
आमा पढेर लेखेर ।।७।।

सपना मेरा अधुरा रहे गरिबी हुनाले ।
ऋण माग्न जाँदा ति पापी साहुले ऋण रोकी दिनाले
*आमा ऋण रोकी दिनाले ।।८।।*



# लाहुरे

*सुन्दर बरुवाल*

राईफलको सिरानी बनाएर

घामपानी आँधीबेरी केही नभनी

पहाड जस्तो अटल छाती भएका

रगतको मूल फुट्दापनि

आँखाबाट एक थोपा आँसु नखसाली

दुस्मन परास्त गर्न जाग्ने

यि बहादुर लाहुरेहरु

आज घर छोडेर पल्टन जाँदा

किन आसुका भेल बगाएका छन्?

किन नौनी जस्तै मन पगालिरहेका छन?

यस्तै प्रश्न सोध्न खोजेका ति ओठहरु

उत्तर सुन्न आतुर ति कानहरुलाई

म कसरी फुकाउनु मेरो मनमा

उकुसमुकुस भएका वेदनाका पोकाहरु,

जुन जताबाट खोल्यो त्यहीँ

झन बलियो गाँठो बन्छ

कुरा त घाँटीसम्म आउछ

चिच्याएर भनु कि त

ए साहेब,

जसरी आमाले १० महिना गर्भमा राख्दा

आफ्नो सन्तानको भविष्यको कल्पना गर्छिन

असहय पिडा अझ भनौ एक परान मरेर,

सन्तानलाई धर्तीमा पाईला टेकाउँदा

मुसुक्क मुस्कुराउछिन किन?

किनकि उनले उसलाई आफ्नो पुरै

जिन्दगानी ठानेकि हुन्छिन।

हो म  लाहुरे मेरा लागि यि राईफल,

त्यस्तै हो

बुवाको च्यातिएको टोपी,

आमाको झुत्रो गुनियो

श्रीमतीको सिउँदोको सिन्दुर,

छोरीको जामा

छोराको खेलौना

सबैको लागि यहि त छ साहरा।

क्रमशः

# लाहुरे

*सुन्दर बरुवाल*

ए साहेब,

मन मेरो पनि छ

रहर कति हो कति

सबै मुस्कुराउने जति खुसी हुने भए,

मेरा यि बुढा बालाई हेर,

ढाड भाँचिने गरि

कुम फुक्लने गरि

पैताला चिराचिरा हुनेगरी

हामी साराको बोझ

आफ्नै टाउकोमा थुपारेर

एक्लै बोकेर हिड्दापनि

सबैका अघि चम्किलै देखिन्छन।

ए साहेब,

आधा पेट खाना

बाँकी परिवारको कल्पना

आधा चाड मनमा

बाँकी सम्झनामा

अनगिन्ती सपना

उजाड विपना

डर मृत्यु संग नभई

परिवारको लाग्छ,

कतै म नै नरहें भने?

कतै विशाल सपना

सानो बाकसमा गए भने?

...त्यसमा पनि मुस्कुराउँछु

लाग्छ म मरे पनि मेरो परिवार बाँच्छ॥

# विचित्रको हाम्रो समाज

*Shristi Joshi*

विचित्रको हाम्रो समाज
म यो सुन्दर सन्सारमा
मानव भएर  बाच्न खोज्दा पनि
त नारी होस भनी
बेला बेलामा भफ्क्भफ्काइ
बाच्न दिदैन मलाइ
यो पृतिसत्तात्मक समाजले ।।

मैले लगाएका लुगामा
स्यालालाइ बाघले हेरे भफ्
ैआफ्ना गिद्दे नगर लगाउदै
मलाइ बलात्कार गर्छन
हिंसा गर्छन र भन्छन छोटो लुगाले गर्दा भयो
अतितका ती दिनलाई सम्भफन्छु म
कि मेरी आमा हजुरआमाले
गुन्यौ चोली लगाउदा पनि
बलात्कार हुनबाट बाकी रहिनन।।

गणतन्त्र आयो, लोकतन्त्र आयो
हुन्छ होला देशमा ठुलै चमत्कार
अब त मलाइ बाच्न सहज होला
भनी सोच्नै नपाउदै
पफ्रेि पनि हुँन छाडेन यहाँ
आचार शब्दले बनेको
भष्टाचार, अत्याचार र बलात्कार।।

आफ्नो जिन्दगीमा म आपफ्लौइ
अधिकार छैन रुपले प म के गरु??
आज कसैको प्रपोज
स्वीकार नगर्नमा एसिड प्रहार गर्ने यो
कुसन्कार , कुलङार समाज भए पछि।।

मैले समाजलाइ खाने गरेर पढेको
भए पनि बिहेमा दाइजो दिन पर्छ
मलाइ गरिबी तिर लम्काउने
यहि समाजलाई देखाउन
छोरा छोरीले केही गर्दा

आमा गतिली भएप छोरी गतिली होस
भाडले पाल्या घोडा ,राडिले पाल्या छोरा
भन्ने ती तुच्छ शब्द
मेरा यी सुनौला कुरा सुन्न खोज्ने कानले
सुनी रहेको छ,
मिलेको छैन मेरा ती कान लाई आराम।।

तिम्रा ती मृग नयनी आखाबाट आँसु
तरन्कित भै भफर्न नपाउन भन्ने
मेरो सानो सपना थियो नेपाल आमा
यहाँ आफ्नै छोरी माथी बलात्कार
प्रयोगशामा प्रयोग हुन बनाइएको
एसिड दिनप्रतिदिन प्रहार
बाभफे भिर पाखा जमिन स्वदेशमा
युवा जति सबै विदेशमा
आश्रीत मात्र देशको जनमानसले
कसरी हुन्छ देशको विकास???

क्रमशः

# विचित्रको हाम्रो समाज

*Shristi Joshi*

मेरो घरको कुकुरले रौ खस्दा थाहा
पाए जस्तै गरि थाहा पाउने
तिम्रा ती आँखा अनि कान
यति कुरा सुन्दा अनि देख्दा
कसरी रोक्न सकुला र?? तिम्रा ती
ठुलाठुला आँखाबाट बगिरहने आँसु।।

एक नारी आपफ्मौ सक्षम र सबल छिन
भनी लागि रहदा,सिकाइ रहदा
अनेक भिडका अनेकौं
संग मैले गरेको सम्बादमा
अनेकौं सिद्धान्तबाट
घरका दुई भित्तमा घरी वारि घरी पारी गरे जस्तै
भिरबाट लडिबुडी हुँदै जमिनमा पुगे जस्तै
अनेकका भफप्पड अनि चडकन खाइ सके मैले।।

कपास जस्ता मेरा ती कोमल ,नरम हात
तिघारीदै छन् आज
मेरै भुमिको जमिनकै माटोमा
मेरी आमाले घिउ घसेर बनाएका गाला
आज पफ्टुि सके च्ट्यान जस्तै
पडकने ती चडकनले
प्रयोगशालामा क्यामिकल टेस्ट गरे जस्तै
मलाइ प्रयोग गर्दा गर्दा
बाङ्गि सक्यो मेरो त्यो सोभफे शरीर
अभफ् ैत्यस्को इज्जत छैन
त्यो वेश्या हो भनी भनिरहन्छ, त्यही समाज
जस्ले मेरो इज्जत संग खेल्दै
एक सेतो कपडामा कालो धब्बा लागायो ।।

सिसा जस्तै हो नारीको इज्जत
पफ्टुेपछी मिलाउन सकिँदैन भन्ने
मेरो समाजलाई
जस्ले सिसा पफ्टुायो उसैको खुट्टा
त्यही पफ्टुेको सिसाले काट्छ भनी सबाक सिकाउन
बाघका नंग्रा सरी तिघारीएका नङ
हिउदमा कुर्कुचा पफ्टुेजस्तै पफ्टुेका गाला
अक्टोपसको जस्तो बाङो शरीर लिएर
सुनौलो माटोको बस्ना त्याग्दै
जमिनबाट उठ्दै,
आकाशलाई जुनले प्रकाश छरे भफ्
ैकैयौं नारीको नेतृत्व गरि
लडाइँ क्षेत्रमा आउदै विजय लिदै छु म ।।

जुन सिसा जस्तै नारीको इज्जत पफ्ट्यो
त्यही सिसाका दुई पाता लगाउने
बेला भएका तिम्रा ती आखाँमा
म नदि बनाउछु ,ताल बनाउछु
वर्षामा मेरो खेती लगाउन
आकाश रोइरहे जसरी
तिम्रा ती आखाँमा सन्चित आँसु
मातृत्व शत्तिफ्लाई अघि बढाउदै
अब निस्कन दिने छैन
मेरी नेपाल आमा।।

# भन फुट्छौ कि जुट्छौ

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

पहिले र अहिलेमा के फरक पायौं
घरिघरि उतै नजर किन तिमी लायौ
म बनाउछु देश भन्नेहरुलाइ
भोट दिएर तिमीले के पायौं
जुट्छौ कि पुट्छौ भन

बिजय जूलूस मनाउन तिमी
भोट र नोट मागन तिमी
अझ लडाइ र झगडामा तिमी
अनि देश बनाउन किन पछि तिमी
भन जुट्छौ कि फुट्छौ

हेर्नलाइ आँखा छन्
सुन्नलाई कान छन्
बोल्नलाइ मुख छ
गर्नलाइ हात
हातखुट्टा राख्ने घर छ
एकसरो खाने वारि छ
मुख जोर्ने चुलो छ
छोरिछोरी पाल्ने कुरो छ
भन जुट्छौ कि फुट्छौ

अरुको थालमा चियोचर्चो छ
काममा सधैं झर्को छ
खानपानमा मसला छ
पेट्मा ग्यास्टिक छ
भन फेर्छौ कि फेरिन्छौ

सबै आफ्नै छ तर दिमाग किन अरुको
मुल्य छैन तिमी भन्छौं दारुको
राजनीति गर्छौं ज्यादा भारुको
खाने मुखलाइ जुँगाले छेक्दैन
भन्ने गर्छौं देश बिगारे नेताले
भन भारु त्याग्छौ कि नेतागिरी

गाउँ बने देश बन्छ, देश बने भेष
भेष बने मान्छे बन्छ, मान्छे बने बेस
भन मान्छे बन्छौ कि त्यहीँ छ बेस

# नेपाल भारत बिशेष समन्ध

*Shristi Joshi*
*Pokhara University*

एक धर्म, एक सस्कृती, एक सस्कार हाम्रो
विश्वमै दुर्लभ होला ,यो सम्बन्ध हाम्रो ।
आफ्नै भाइ टुत्रिफ्य भए हिजो पाकिस्तानी
तर नेपाल अभफ् ैनजिक, उस्तै सहयोगी छ नि।।

अङ्ग्रेजको चेपामा परेको भारत जब जाग्यो
नेपालीका सहयोगले अंग्रेजÞ कुलेलामा भाग्यो ।
नेपाल जब अस्थिर जनयुद्धमा तरङ्गित थियो
हो हाम्रो साथी त्यही भारत त सहयोगी थियो ।।

धार्मिक ,सस्कृतिक ,सामाजिक सामर्थता छ हाम्रो कस्तो
पासपोर्ट/भिसाको अवरोध छैन आउन जान छ सस्तो।
नेपाली गए भारत ,भारतीय नेपालमा काम गर्न
एकले अर्काको दुःख बुझ्ने तयार हुने मर्न ।।
भारतीय पर्यटन आए, नेपाली प्रकृतिमा रमाउन
बेरोजगार नेपाली गए ,भारतमा पैसा कमाउन ।
सक्ला केही जन,सत्ता पाउन भारतको विरोध गर्न
परन्तु सक्ने छैन ,हाम्रो अटुट सम्बन्ध पफ्रने ।।

समय भफ्न बढी भफ्न सम्बन्ध सुमधुर छ नि
एकका दुःखमा ,दुःखी सुखमा ,सुखी त्यही त सुमधुर सम्बन्ध हो नि ।
नेपालका पशुपतिमा भारतीय भट्ट पुजारी
भारतका ठुला मन्दिरमा नेपाली छन चट्ट पुजारी

# भुइँमा बस्ने मान्छे

***भरत खत्री***
***सउल, दक्षिण कोरिया***



म भन्छु
उदेश्य के लिनु उडी छुनु चन्द्र एक
तिमी भन्छौं
भुइँमा बस्नेले आकाशको सपना देख्ने
म भन्छु
भुइँमा बस्नेले
नोबेल प्राइजको सपना देख्नु पर्छ
कि त यो चोला फेर्नु पर्छ
तिमी भन्छौं
यार साथी
कस्तो वाइयात कुरा गरेको
भुइँको मान्छेले रुखको सपना देख्ने
यो त आकाशको फल आँखा तरि मर हो

म भन्छु
तैले आटेश् म पुराउछु भन्छन् रे भगवानले
तिमी भन्छौं
यो त भन्ने कुरा न हो
कसले देखेको छर
म भन्छु
म केहि नगरी बसौं त
तिमी मुसुक्क मुस्कुराउदै
स्वागत गर्छौं

म केही गर्न खोज्छु
केही नयाँ पाउन खोज्छु
कहिँ टाढा पुग्न खोज्छु
तिमी भन्छौं
यो सब के गरेको
म एककदम अघि बढ्छु
तिमी दुईकदम
मलाई
पछि तान्छौ
मलाई झट्ट
सिंहावलोकन याद आउँछ
दुईकदम पछि हटेको म
जहाँको त्यहीँ हुन्छु

म केहि आइडिया
तिमीलाई भन्छु
तिमीले आइडियाको
यसरी हत्या गरिदिन्छौ कि
त्यो पुनः कहिले
आफ्नो ढाडले अडिन नसकोस्
म सोच्छु
कतै
नास्तिक र आस्तिकको
कथा जस्तो त भएको हैन
म तिमीलाई
एकसुरले हेरिरहन्छु
पहिले र अहिलेमा केही फरक पाउदिन



क्रमशः

# भुइँमा बस्ने मान्छे

***भरत खत्री***
***सउल, दक्षिण कोरिया***



म अरुको खुशीमा खुशी थप्छु
तिमी अरुको दु:खमा नुनचुक छर्छौ
म अरुको दु:खमा सुख देखाउन खोज्छु
तिमी अरुको सुखमा दु:ख देखाउन खोज्छौ
तिम्रो लागि यो संसारमा
सवै दुश्मन नै दुश्मन छन्
कि त अरुको भाग खोसेर खाने स्याल
म फूलको आँखामा फूलै संसार सुनाउछु
तिमी भन्छौं
आदर्शवादी कुरा
कुराकै लागि सुहाउँछ
म सोच्छु
यो त ठिक कुरा
हो कि क्या हो
तिमी यस्तै यस्तै सिकाउछौ
म पनि त्यस्तै त्यस्तै गर्छु
तिमी जुन बाटो हिड्छौ
मलाई त्यतैत्यतै तान्छौ
म पनि केही नबोली
पछ्याइ रहन्छु

म र अन्धभक्तमा
केही फरक पाउँदिन
साहसी र समर्पित हुँदाहुँदै पनि
हनुमान त यसै बदनाम छन्
निरंतर लाग्दा लाग्दै पनि
बाटो विराउछु
अलमल्ल पर्छु
लगनशील हुँदाहुँदै पनि
मौरीले मह अरुलाइ दिन
यसै बिबस छन्
पुतलीले उज्यालो खोज्दा खोज्दै
बत्तीको उज्यालोको तातो रापले
ज्यान गुमाउँछ
जीवनको अन्तिम घडिमा
यहीँ सोच्दै
आफ्नो कर्म आफ्नै आँखाले
देख्दै,
म देह त्याग गर्छु

# Heart From Alien Land

*Samjhana Dhungana*

The thought of the mind
And the beat of the heart
Is not constant,
Everything here
Keep me far a way
Like a time machine
And makes me realize
The balminess
Of my land....

Body sleep here,
While eyes makes the dream of there
Empty stomach filled with food here
But the toung search the taste of there
I am existing here
Where as
my birth can be meaningful
Only there....

If i touch the soil,
My memory back to the
Smell of the roots there
If i move with wind,
My body assumes
The freshness is from there
I can feel, I can cheer
My unconditional
Affection
To my land, as my dear...

# चुनाव आयो

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*



एक बोतलमा बिक्ने दिन
एक खिल्ली चुरोटमा बिक्ने दिन
मासु भातमा बिक्ने दिन
वारिपारीका दाजुभाइ
एक आपसमा कुट्ने दिन
जनता एकै छिन्
नेता पाँच वर्ष टिक्ने दिन

कति चुनाव गए
कति आश्वासन आए
कति पुस्ता फेरिए
कतिका भुडी भरिए
दशैमा गाडी हिड्ने बाटो
खोज्नु पर्छ
रोजगारीको लागि
खाडी र अरब रोज्नु पर्छ
महाशय,
अब फेरि
कुन मुख लिएर
हाम्रो गाउँ आउदै छौं
हातिका बाहिर दात देखाउदै
भित्री दातले हामीलाई चपाउदै छौं

हो हामीले फेरि सुन्ने छौं
गल्दाका काका साल पाटिमा
बिक्नु भयो रे
सिर्बुका ठुला बा रेस पाटीमा
बिक्नु भयो रे
अबुवाका साना बा पा पाटीमा बिक्नु भएछ

बाकी म छु
म बिक्दैन
हो म भक्त हू
म कुनै पाटीको
झोले भक्त हैन
न कुनै टिके नेताको
म यो रास्ट्रको भक्त हू
हो म झन्डा बोकेर हिड्छु
कुनै पाटीको हैन
नेपाल रास्ट्रको बोक्छु
हो म गाथा गाउछु
झोले कार्यकर्ता वा नेताको हैन
सिङ्गो रास्ट्र र रास्ट्र निर्माताको
हो म मर्न परे मर्छु
कुनै पाटिको लागि हैन
नेपाल आमाको लागि मर्छु



क्रमशः

# चुनाव आयो

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

म त्यो आवाज हू
जसको आफ्नो आवाज दबाइएको छ
म निर्मला पत्न हू
म भुकम्प बाडी पिडित हू
म हिमालको भोटे
पहाडको बाहुन
तराईको यादब हू
म बिहान बेलुका
हातमुख जोर्न नस्कने
ख्याटेको रोगी
क्षयरोगको रोगी
झाडापखाला लाग्दा
जीवनजल नपाउने जनता हू
म आफन्त बाट पीडित जनता हू
म नेता बाट पिडित जनता हू

मासु भात रक्सी बियरमा बिक्ने
आया क्या गजबका मुर्गाहरु पाइन्छ
यो गाउँमा... हा हा हा
भन्ने दिन गए
गल्दा सिर्बु र अबुवाका
जनता जुट्नु पर्छ
यति मात्र हैन
पश्चिमका गजेन्द्र
पुर्बका नरेन्द्र पनि जाग्नु पर्छ
भाइ फुटे कबार लुटे
किन हुन दिने

हाम्रो एकता बलियो बनाउनु पर्छ
एक थुकी सुकि सय थुकी खोला
काधमा काध हातमा हात जोड्नु पर्छ
अब कि वार कि पार लाउनु पर्छ
घरमा आउने नेतालाई
पातन खोलाको पानी
सिचाइको लागि कहिले ल्याउने
वर्षमा कति पटक बाटो बनाउने
छोराछोरी पढाउन किन
बोडिङ्ग स्कुलको भर पर्ने
हाम्रो स्कुलमा दरबन्दी
कहिले थप्ने
कृषिका तालिम कस्ता हुन्छन्
हामीले कहिले देख्ने
यो जातिबाद छुवाछूत
कहिले सम्म हटाउने
संविधान भनेको के हो
थाहा छैन भने
सामान्य न्याय अन्याय
कसरी छुट्याउनु हुन्छ
तपाईको सक्रियतामा
भएका पाँच काम
केहि जबाफ फर्काउनुहोस
हैन भने जानुहोस
अनुसन्धान गर्नुहोस्
भोट माघन आउनुहोस्
भन्ने हाम्रो हिम्मत हुनु पर्छ

# पहिचान

*रबिन्द्र प्रसाद तिमिल्सिना*

*बडिमालिका,बाजुरा, हालकिर्तिपुरकाठमाडौं*

एक जोर हड्डी  अलिकति मासु
र छाला बाहेक को हौ तिमी ?
कहाँ बाट आएका हौ
र के हो तिम्रो पहिचान ?
तिमिलाई थाहा छैन ,
कुन हो तिम्रो भाषा
र कस्तो हो भाषाको ब्याकरण ?
सबैजस्तो उस्तैगरी कोलाहलै कोलाहलमा
किन मिसिन्छौ
भन,
आफैले आफैलाई बिर्सेर
सँसार जित्न खोज्नुको के अर्थ
जसरी
बिर्सेर आफ्नै बच्चालाई आहार बनाउछ सर्प ।

सस्कृती ,भाषा ,भेषभुषा
के हो इतिहास
को हुन तिम्रा पुर्खा
के हुन् र के हैनन
कहाँ थियौ र अहिले कहाँ छौ ?
के हुन् तिमिले मनाउने पर्बहरु
किन मनाईन्छ , दशै- तिहार
के छ रहस्य खुशी हुँदै मनाउनुको ?
किन मनाइन्छ
माघी ,इद  छ्ठ   ल्होसार
र कृस्मस
किन गरिन्छ दान र पिण्डदान
करकापले वा डरले ?

सडकमा निस्किदै , एक हुल नाराबाजी गर्दैमा
बन्दैन तिम्रो पहिचान र हैन पनि
आफैलाई नचिनेर पहिचान खोज्नु भनेको
आफैमाथि प्रश्न लगाउनु हो ।।

दाउरा-सुरुवाल किन लगायौ
कसरी सरे टि-सिर्ट र च्यातिएको पाइन्टमा
किन बेरिन्छ सेतो धोती र
लगाउछौ निधारमा टीका ?
हिंसा नगर भन्नेलाई नै
किन चढाउछौ कुखुरा ,बोका र हाँस
आफ्नो मर्दा रुनेले
अरु मर्दा बिचार पुराउनु पर्दैन ?
किन मनाउछौ तिज र बस्छौ भोकभोकै
गोमाले साच्चै शिव पाईन वा कथन मात्र थियो
के भन्छन् ढुङ्गामा कुदिएका
अक्षर र चित्रहरुले
र के हो तिनको मर्म ??

धरातल बिर्सेर माथी उक्लिन खोज्दा
कतिखेर कता बजारिन्छ पत्तै हुँदैन
तिम्रो ,
सस्कृति , भाषा , भेष-भुषा
र लगाउने लुगा तिम्रो पहिचान हो
जुन तिमिबाट कोसौ पर छ र थाहा छैन ।
पहिला , आफैलाई चिन
आफ्नो परिबेश र भुगोल चिन
अनि मात्र ,
त्यसरी नै सन्सार जित्ने भिडमा जाउ ।
आफुले आफैलाई बिर्सेर बाच्नुको पनि के अर्थ
यो त मरेतुल्ले हो ।।।

# सियो खोइ सियो

***भरत खत्री***
***सउल, दक्षिण कोरिया***



तिमी सियो
अनि
धागो म,
बन्न पाए
जीवन यात्रा
तिमी संगै
अघि बढाउन पाए,
हार पनि
जित हुन्थ्यो,
जीत झन संगीत,
तिमी संगै
दुइचार कदम
अघि सर्न पाए,
के भन्छौं तिमी
कि,
आटिदिने हो
यो जोवन
एक अर्कालाई
साटिदिने हो,
पुरानै सैलिमा
नौ डाडा काटि दिने हो,

भन्छौं भने तिमी
तारा टिपेर दिन,
म...त्यो सक्दैन
तर
तिम्रो लागि
म,
तारा सम्म पुग्ने
यन्त्र बनाउन सक्छु,
तिमी मेरो
म तिम्रो
भनी,
जुनसुकै
मन्त्र जप्न सक्छु,
के भन्छौं तिमी
कि आटिदिने हो,
यो जीवन
हाम्रै नाममा साटिदिने हो,
पुरानै शैलीमा
पञ्चेबाजा बजाइ दिने हो,



क्रमशः

# सियो खोइ सियो

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

पर्दैन रत्तिभर डराउन
नजिक हुनलाई
मुनामदन,
पक्कै फल्प खान्छ
हाम्रो प्रेमकथा अमर बन्नलाइ,
च्यालेङ्ज गरौं,
आउ...
रोमियो र जुलिटलाइ
मुना र मदनलाई
लैला र मजनुलाइ

खासगरी
तिम्रो र मेरो,
अलग
दुनियाँ हुनेछ
तिमी रानी
राजा म,
हाम्रो
भब्य दरबार हुनेछ

तिम्रा नसालु
आँखा,
तिम्रो ओठको मुस्कान
सल्लक परेको केश
उज्यालो अनुहार
मधुर स्वर
अनि
तिम्रो जीवनको बिशेष
यहाँ,
हिफाजत हुनेछ

भन्छौं के तिमी
कि,
आटिदिने हो,
अजम्बरी माया प्रेम
गासिदिने हो
नयाँ शैलीमा
नया जोडि बनी दिने हो

# म मान्छे फेर्दिन्छु

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

दाउरेका छोरा अब्राहम लिंकन
शक्तिशाली मुलुकका रास्ट्रपति बन्न सक्छन्
उट्रउट्र उचारण गर्ने नसक्ने कालिदाश
संस्कृत भाषाका महाकवी बन्न सक्छन्
कुख्यात डाकु रत्नकर
रामायण रचेर वाल्मीकि बन्न सक्छन्

अशक्त भएर पनि
हकिङ्ले ब्याक होल खोज्न सक्छन्
अशक्त झम्क कुमारीले
जीवन काडा कि फूल कोर्न सक्छिन

दोष लगाउन खप्पिस
दाउरेका छोरा ल्याउ रे
ल्याउ रे का छोरा म्याउ रे
म्याउ रे का छोरा लाउरे
लाउरेका छोरा च्याउरे बन्छन्
भाषा फुट्न नपाउदै
पाषाण जस्तै रुखो
झ्याउ रे गाउ छन्
अक्षर चिन्न नपाउदै
अर्बौंका ठेक्का पट्टा
भित्री चोर गोजीमा
भित्र्याउ रे भन्छन्

बलिया बाङ्गाहरुले आँखा देख्दैन्न
देखे पनि कान कहिल्यै सुन्दैन्न
कान सुनी हाले
हात कहिल्यै चलाउन्न
हात चलाइ हाले
कि दातै झार्दिछन
कि घाटै पार्दिन्छन

दोषीहरु को भिड्मा
अर्को दोषी खोज्दै छ
अछुतो कोहि छैन
तैपनि आफुलाइ
पञ्चामृत अर्पण गर्दै छ

अर्को ठुलो नारा छ
म देश फेर्दिन्छु
म मधेस फेर्दिन्छु
म घरदेश फेर्दिन्छु
म मान्छे फेर्दिन्छु ।



# समीक्षा अनुभूतिहरूको

*Samjhana Dhungana*

आजभोलि आँखा हरूले
फक्रदो बिहानको भन्दा
अस्ताउन लागेको घामका विकिरण हरूलाई
मन पराइदिन्छ
त्यसैले सडक किनारमा
अँध्यारो रातको खिस्सि गर्दै
बलेका कृतिम बत्तीहरूलाइ म
औधी
घृणा गर्दछु।

मलाई आफ्नै श्वासको
मन्द ध्वनि पनि चर्को लाग्दछ
कानकै नजिक आएर
झ्यालि पिटेजस्तो
हरेक पटकको श्वास प्रश्वासमा म आतिन्छु
नचले हुन्थ्यो मुटु
स्थिर भए हुन्थ्यो मानसपटल
म शून्यतामा कहि कतै
हराउन चाहान्छु।।

# लाग्दैछ झूटो

*Samjhana Dhungana*

लाग्दैछ झूटो प्रितको सिंगो सभ्यता सकियो
साथैसाथमा अन्त्य बिहिन कथा सकियो।

न लिनु बाँकी रह्यो न त दिनुनै अब केहि
त्यही लेनदेन मा त मेरो जायजेथा सकियो।

हारजित को त अब कुरै नगर वेईमानि
तिम्रो झुटको च्याखेभित्र अथाह सकियो।

सोच्दै होलाऊ तड्पाई आँए  रक्तकोषिका रेटेर
साँच्चै भनौ? तिमी गयौरत मन-मुटुको व्यथा सकियो।



# मजा के छ ?

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

लखर लखर यताउता
डुल्नुको मजा के छ ?
भाइरासको फन्दामा परि
जिन्दगी डुबाउनुको मजा के छ?

हामी सबैलाई थाहा छ
बाहिर सिकारी कुरि रहेछ
मुख मिठाई रहेछ
र्‍याल चुहाइ रहेछ

उ भन्दै छ, मेरो नजिक पर मात्रै
म तलाइ एकै गासमा डकारी हाल्छ
आफ्नो अमुल्य जीवन
सिकारीलाई सुम्पनुको मजा के छ ?

जीवन एउटा फूल हो
यसलाइ सम्हालेर राख्नुहोस्
भोलि फूल फुल्न सक्छ
बगैंचा डकमक्क भर्न सक्छ
बिना सित्तै सित्तैमा गुमाउनुको मजा के छ ?

मन भुलाउन टाढा जानू पर्दैन
घर भित्रै छ, लाख खुशी
सरकारको आखा छल्दै
गल्ली गल्लीमा भड्किएर
हिड्नुको मजा के छ ?

# नेताका फोस्रा भाषणले देश विकसित हुँदैन

*बद्री प्रसाद भट्टराई*
*तिलोत्तमा ५ मणिग्राम ,रूपन्देही*

हामी धेर सुत्यौं उठौं अब छिटो नेपाल बिक्ने भयो,
स्वार्थी शासकका कुकृत्यहरूले यो देश डुब्ने भयो ।
हिम्रो जीवन अन्धकार पथमा बेकार मर्ने भयो,
डाँफे मौन भयो नदी-नद सुके यो देश मुर्दा भयो ।।

~१~

फोस्रा भाषणले गरेन यिनको ज्यूने व्यवस्था यहाँ,
रून्छन् दीन मुहार प्यास नबुझी आँसु खसालुन कहाँ?
नेताका गुणगानले र यिनकै पूजा र सम्मानले,
हाम्रो राष्ट्र डुबीसक्यो समयको दुर्दैव अज्ञानले ।।

~२~

हामी मानव हौं स्वतन्त्र नभए हाम्रो छ अस्तित्व के ?
यी संकीर्ण विभेदका सडकमा सप्रिन्छ व्यक्तित्व के ?
तोड्नू पर्दछ ज्यूनबन्धनहरू उड्नुछ आकाशमा,
धेरै सहय हुदैन शासन कडा मान्छे हुने देशमा ।।

~३~

हामी हौं अब सम्बिधान देशका हामी स्वयं चालक ,
हामै तन्त्र स्वतन्त्रता अब मिलोस् कोही न हुन् बाधक ।
हामी मुक्त बनौ उठौं अब उडौं तोडेर यो पिजरा ,
च्यातौ यी छलका विधान यिनका छन् दायरा सांगुरा ।।

~४~

हाम्रो जीवनको पवित्र सपना प्यारो प्रजातन्त्र हो,
त्यस्को सात्विक छाहरी समयको विज्ञानको मन्त्र हो ।
हामी लम्किन सक्दछौं अभयले अन्मुक्त सोचाइले ,
हामी ईश्वर भेट्दछौं उदयले सहित्यले कर्मले ।।

# म फूल हूँ

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

म गुलाफको कोपिला हूँ
टिप्ने कोसिस नगर्दा हुन्छ
म गुलाफको फूल हूँ,
च्यात्ने कोसिस नगर्दा हुन्छ

धैरैले सजाय मलाई
पकेटमा, हातमा, गमलामा
अब मेरो पालो हो
म आफै सजिन्छु

जसले मलाई छुनेछ
म त्यसको हात फोरिदिन्छु
जसले मलाई कु-दृष्टि लाउनेछ
उसको आँखा फोरिदिन्छु

म फूल हू मतलब
म नारी हू, म नारी हूँ
मतलब, म सृष्टिकर्ता हूँ
सृष्टिकर्ता हू, मतलब आमा हूँ

आफ्नो सम्मान चाहन्छु
म अरुको सम्मान गर्छु
लेनदेनको लागि हैन
संसार धान्नको लागि
(नारीहरु प्रति समर्पित कविता)

# ति बा का दिन

*श्याम गैरे*

आङ्ग सिरिङ्ग अनि मन फुरुक्क
आहा!क्या दामी धवलागीरि देखेपछी मनै हुरुक्क ।
ए साहु हसिया देऊन धान काट्नलाई
उनकी छोरीसंग जवानी साट्नलाई ॥

खेतालाले बोके धान अनि ल्याए खलोमा
के गर्नु हजुर जलिरहे गॉउले बा सलोमा ।
मन धमिलियो अनि थाक्रोमा काग करायो
ति साना टुहुराको सपना हरायो ॥

ए दैव, के गरिस यस्तो तैले
"सोझो रुख पहिला कॉटिन्छ पहिले " भने सबैले ।
उता धवलागीरिमा हिउँ पग्लियो
यता गाउँलेको बलिन्धारा आँशु सङ्लियो ॥

आयो दशै अनि तिहार पनि सबैलाई
मनमा पिङ्ग अनि हातमा ऋण थोप्रियो गाँउलेलाई ।
केहि व्रत वसे, कोही चन्द्रमाकोओडार पसे
खै किन हो सवैको मनमा गाउँले बा चन्द्रमुखी वनि वसे ॥

त्यो औसीको रातामा बत्ति बालेको
कसैले नि बिर्सेका छैनन् उनले बोलेको ।
चार्डपर्वको वेलामा बाको पसिना बसायो
विडम्बना ति गाउँले अनि टुहुरो बाको खिसी उडायो संगै सवैलाई हँसायो

# जे आउँछ मज्जाले पचाउँछ

*भरत खत्री*
*सउल, दक्षिण कोरिया*

पहिले धेरै दियो खुसि बनायो
पछी सबै लुट्यो दुखी बनायो
समयको खेल हो भन्दै
इतिहासले सदै अन्धो बनायो

पुर्खाहरु लडेकै हुन् देशको निम्ती
हामी लड्यौ आफ्नो निम्ती
युद्ध भूमीमा बीरगति प्राप्त गर्दा
माटो हास्यो, नेपाली आमा हाँसिन

उहिले खुसीले हास्यो देश
अहिले पीडाले रोयो देश
तिमी बस्यौ ढुङ्गो झैँ
नबोली शान्त बस्यौ

बीपीको सरकार ढल्यो
निर्दलीय व्यवस्था लाग्यो
सबै तहसनहस भयो
तिमीले सबै मज्जाले पचायौँ

मदन भण्डारीको हत्या भयो
तिमी कानमा तेल हालेर
दिउसै ओछ्यानमा सुत्यौ
अनि सबै मज्जाले पचायौँ

राजदरबार हत्या काण्ड भयो
देश रोयो दुनियाँ रोयो
तर तिमी पहिले झैँ
सबै मज्जाले पचायौँ

जनान्दोलनमा ऊ मर्यो
फलानो मर्यो ढिसकानो मर्यो
सबै मरे सबै गायब भए
तिमीले फेरी मज्जाले पचायौँ

निर्मलाको बलत्कार भयो
नेपाली चेलिहरुको अशमिता लुटियो
बाहिर हिड्न गार्हो भयो

फेरी तिमीले मज्जाले पचायौँ

देशका सिमा स्तम्भ ढले
कालापानी पराइको भयो
आतंककारीका गतिविधि बढे
फेरी तिमीले मज्जाले पचायौँ

के तिमि पचाउन जन्मिएका हौ
भगवानले तिमीलाई किन रच्नु भएको
तिमीले तिमीलाई कहिले सोध्यौ
अरुलाई मात्र किन सोध्छौँ

तिमीले पहिले बाटो खन
तिम्रो पछी न आउने को हुन्छ
अनि राम्रो कुरा मज्जाले पचाउँ
नराम्रो कुरा वान्ता गर

# मरुभुमीको अन्धो भगवान !

*प्रकाश खत्री*
*गुल्मी नेपाल*

समयको पाउमा वस्त्र चढाएर
निवस्त्र भएका वृक्षहरू जस्तै
भित्र बाट उजारिएको तिमी
हनुमानले पहाड बोकेसरी
भ्रमको सञ्जीवनी बोकेर
मरुभूमिको भगवान खोज्न भौतारी रहेछौ !
तिमीलाई थाहा छ,
सूर्यले एकटक मरुभुमी हेर्दछ,
मरुभूमिले तातो सुसेली हाल्दछ
तिमी निसास्सिरहेछौं
पखेटा गलेर लत्रक्क
बालुवामा पछारिएको चरा जस्तै,
फाटेका छन् तिम्रा पैतलाहरु
हिउँदको खडेरीले
धाजा फाटेका खेतहरू जस्तै,
र पनि तिमि घस्रिरहेछौं
मरुभूमिको भगवान भेट्टाउन तिमी यसरी हरायौ की
अशान्त,अहंकार
घृणा, डाहा र रिसको मरुभूमिमा,
रोमालिएर अन्धकारमा
उज्यालोलाई धिक्कारी रहेछौ,
धेरै पैसा कमाउनु छ तिमीलाई
धेरै खुसी किन्नु छ
अहंकारको ज्वालाले डामिएपछि
चिसो एक गिलास शितलता किन्नु छ..
कस्तुरीले बिना खोजे जस्तै
तिमी आफैलाई बिर्सिएर
मरूभूमिमा
शितलता खोज्न भौतारिरहेछौ
तिमी आफूलाई आफैमा छाडेर
मरूभूमिमा भगवान खोज्न दौडिरहेछौ !
तिमी त मानवरुपी कस्तुरी भइसकेछौ
तिमी त अँध्यारो मात्रै देख्ने अन्धो भइसकेछौ,
चमेराले दिन नदेखे जस्तै,
तिमी देख्दैनौ
जिवन, संगीत र समयका चालहरु,
छल्किदै तिमी भित्र
बिनामा सुतेका संगितका छालहरू,
तिमी देख्दैनौ
तिम्रो सगरमाथाको शिरबाट
सुस्ताएका नदिहरु,
गुराँसको माला लगाएका पहाडहरू,
शीत बोकेका शिरूहरु,
शिरू खेलेका बारीहरू,
सुन झुलेका खेतहरू,
पहाड चिरेका तालहरू,
वसन्त बोकेर दौडिँदै गरेको
शीतल झोक्का बहावहरु,
बेवास्ताको जालोले ढाकिएपछि
कस्तुरी सरी दौडिरहेछौ
मरूभूमिमा गिलास भरको शितलता खोज्न,
कतै सहारामा हराएको भगवान खोज्न !



क्रमशः

# मरुभुमीको अन्धो भगवान !

*प्रकाश खत्री*
*गुल्मी नेपाल*

सृष्टिकर्ता तिमी आफै होइनौ र ?
सम्भारकर्ता पनि त तिमी नै होइनौ र ?
जसले आफ्नै तिथि, मिति र बारमा
भगवान् जन्मायो,
मठ, मन्दिर, चर्च, गुब्बा र मस्जिद बनायो
र पनि दौडिरहेछौ तिमी,
कस्तुरी बिना खोज्न दौडिएसरी
आफै भित्रको भगवान नदेखेर
मन्दिर र मस्जिदमा भगवान् खोज्न !
छाडिदेऊ अब,
कुनै मरूभूमिमा भगवान पलाएको छैन,
मन्दिर र मस्जिद ले भगवान फलाएको छैन !
सिङ्गो ब्रह्माण्ड अटाउने तिमीमा
कसैको भलो अटाएको छैन
जिउँदो भगवान अटाउने तिमीमा
कसैको खुसी अटाएको छैन
पोखिदेऊ
डाहा का डालीहरू,
घोप्टाइदेउ अहंकारको अञ्जुलीहरु,
ढल्काइदेउ कुण्ठा भरिएका कुढेँहरु,
रित्तो, खाली र स्वतन्त्र आफूलाई
आफैमा लिएर जाऊ
ब्रह्माण्डको संगीत ॐ कारमा कराउ,
तिमीलाई तिमी भित्रकै तिमी पर्खिरहेछ

# मेरी आमा

*सरस्वति जोशी*



तिमी रुदा मैले हास्न नपरोस् है मेरी आमा

तिमि विना बाच्न मैले नपरोस् है मेरी आमा ।।

मेरोलागी संसार सृष्टि तिमि नै है

संसार छोडि अलग हुन नपरोस् है मेरी आमा ।।

तिमिलाई मिठो खाना राम्रो लुगा दिन नसकुला

बस् भोको पेट र नाङ्गो राख्न नपरोस् है मेरी आमा ।।

संसारकै खुशि दिन नसकुला तिमिलाई म

संन्तान छोडि वृद्धाआश्रम जान नपरोस् है मेरी आमा ।।

कसैले तिमिलाई अनपढ भन्दा चित्त नदुखाउनु

मेरा सन्तान अनपढ छन् भन्न नपरोस् है मेरी आमा ।।

छोडे  आज आफ्नैले आफ्नाको साथ पाउन छोडे

विरामी पर्दा उठाउने हात पाउन छोडे ।।

कस्तो परिस्थीती आयो विश्वमा

आफ्नैको लास आफ्नैले जलाउन छोडे ।।

हिजो सवैसंग तेरो मेरोको भावना पाल्यै

आज न तेरो भयो न मेरो ।।

हिजो त भन्दा म के कम भन्दै तछाड मछाड गर्यै

आज त्यहि भिडको तछाड मछाडले नै मर्यै ।।

# निधार

आर एन अधिकारी, पोखरा

थाहा छैन मेरो निधार कहिलेदेखि बन्न सुरु भयो
तर म जन्मँदा देख्नेहरूले निधार ठूलो देखेछन्, र
निधारमा मेरो भविष्यको ऐना खोजेका थिए रे ।

त्यसपछि सुरु भयो एउटा निधार कहानी
म रिसाउँथे मान्छेहरू निधार हेरेर पत्ता लगाउँथे ।
म भित्रभित्रै खुसी हुन्थेँ मान्छेहरू निधारैबाट बुझ्थे ।
म जता जता जान्थे मेरो निधार बोकेर नै जान्थेँ ।

मलाई सफलता मिल्थ्यो निधारको कारणले
मलाई असफलता मिल्थ्यो निधारलाई सम्झन्थे ।
मानौं मैले गरेका हरेक कर्मको फल
मेरो निधारले बोकिरहेछ
जस पनि अपजस पनि ।

उमेरसँगै पीडा, परिश्रम र पसिनाले
कोरेका निधारका धर्साहरू
हत्केलामा कोरिएका भाग्यरेखा जत्तिकै गहिरा भए
तर, जिन्दगीको क्यानभासमा
खुसीको रेखाचित्र कोर्न भने सकेनन् ।
झर्दै गरेका केशले निधारको आकार त बढाए
तर, जीवनका उमङ्गको परिधि भने साँघुरो पारे ।
अन्ततः निधार र भाग्यको कुनै सम्बन्ध नरहेको
प्रमाणित गरी समाधिको बाटो लागे ।

# युवा

*सरस्वति जोशी*

धर्म अनी संस्कृती भुल्दै छन् है युवा
अर्काकोनै देखासीखी गर्दै छन् है युवा ।।

कैले तेस्रो अनी कैले ढाडो कपाल वनाएर
छोटो अनी प्वालपारी लुगा लागाउदै छन् है युवा ।।

आमा वुवा आपफन्तले सम्भफउन खोज्दा
मेडन जमानाको नयाँ पफ्सेन भन्दै हिड्छन् युवा



# म

*सरस्वति जोशी*

शुन्दर शान्त नेपालमा आउदै छु म
आन्दोलन र हत्या हिंसा ल्याउदै छु म ।।

मिलेको यो समाजलाई टुत्रफ टुत्रफ पार्न
सोभफ साभफ को ज्यानलीन आउदै छु म ।।

पूर्व मेचिहुदै पश्मि महाकाली सम्म
मजदुर वर्गको गासखोस्न आउदै छु म ।।

शुन्दर शान्त देशभनी चिनिएको थियो
तराइ अनि मधेस खोस्न आउदै छु म
चार जात छतिस बर्णको साभफ पफ्लुवारीलाई
सिसासरी पफ्टाउन आउदै छु म ।।

जनयुद्ध पिडाहरु सेलाउन नपाउदै
त्यो भन्दानी ठुलो युद्ध लिई आउदै छु म

# कंकालहरुको परीक्षा

कृष्ण रिजाल
मोदी गापा , पर्वत

मानव सभ्यताको अट्टाहास गर्दै
बेतोडले दौडिरहेछन
केहि कर्कश उच्चारणहरु,
केहि अमानविय  ब्यवहारहरु,
हाम्रो भुत्ते चेतनाबाट,
जात, बर्ग र बर्ण भन्दै, ,

स्वघोषित उच्चताले रटाएको ज्ञानले
मानवहरुमा फरक देख्दै गर्दा,
पशुपंक्षिहरुले हामि सबैलाई
मात्र मानव देख्छन, ,

आउनुस,
बरु यौटा प्रयोग गरौं कंकालहरुमा
शास्त्रका ठेलि पल्ट्याउँ,
मन्त्रोच्चारण गरौं र भनौ
कुन जात थियो यो ?
पुँजि लगाएर अनुसन्धान गरौ वा
चाहे शास्त्रार्थ चलाउँ, पत्ता लगाउँ
कुन बर्ग हो यो?
श्वेत , अश्वेत कस्को कंकाल हो ?

यदि नतिजा
-कंकालहरुको कुनै बर्ग, बर्ण हुँदैन्।
-कंकालहरुको कुनै जात हुँदैन्।
हो भने,
कुन सजीव बौदिकताको उत्कर्ष स्वरुप हुन्छ
यहाँ भेदभाव ? ?

बरु
आउनुस अब आ-आफ्नो पापको कबुल गरौं,
ताकि
मानवशृष्टिले आत्माग्लानि नगरोस, , , , , ,

# उल्झन

अस्मिता केसी
घर: प्युठान,हाल: काठमाडौँ

लच्छाबाट छुट्टिएको धागो
एकपटक अल्झिएपछि
थुप्रै गाठाहरू बन्दा रहेछन्  !

गाँठाहरु
कुनै सहजै फुक्दा रहेछन्
कुनै फुकाउनुपर्ने रहेछ
दु:ख गरेर
कुनै फुक्नै नसक्ने गरी
समयसितै अल्झिएर बन्दा रहेछन्
अझ ठुला गाँठाहरू !
जस्तो कि हाम्रा बा'
पैसा ऋण लिएर ऋण तिर्नुहुन्छ
आमा नुन पैंचो लिएर पैंचो तिर्नुहुन्छ

अल्झिएको धागो जसरी
अल्झिएको छ बार्दलीमा मकुराको जाल,
अल्झिएको छ हुरीमा
छानोको खर
अनि अल्झिएको छ दाइजो नपाएर
गौना कुरिरहेकी दिदीको वर ।

अल्झिएको छु म
जिन्दगीका यस्तै तमाम गाँठाहरुमा
समयको छालमा मेरो मन अल्झिएको देखेर
टाढिंदै गइरहेको छ मबाट मन साटेको प्रिय मान्छे
पनि

के सोच्यो होला उसले
मानौं अल्झिएको धागोमा परेर सियो अल्झिएझैं
ऊ पनि अल्झिनुपर्छ मेरो समस्याको पोकोमा ?
मानौं उसै गरी बन्धक छ मेरो खुसी पनि
उल्झनहरूको साँघुरो पिँजडामा !

# मसानघाटको सन्देश

महेश चौलागाईं

दुई दशक अघि ढलेको थियो शरीर
मन
कहिल्यै मर्दो रहेनछ
उडिरहेछ आकाश भन्दा माथिको शहरमा
र हेरिरहेछ जमिनमा तीन फिट तल
गाडिएको आफ्नो कंकाल ।

आफ्नो अधिकारको लागि भन्दै
गोलि थपेको थिए शरीरमा
आफ्नो न्यायको लागि भन्दै
एक बोतल एसिड थापेको थिए शरीरमा
शरीर त्यसबेलानै जलिसकेको थियो
मन
अझै उडिरहेछ चङ्गासरी
आफ्नो न्याय भेट्टाउने आशमा ।

खबरदार, मेरो अधिकार कसैलाई नदिनु
थाहा छ मलाई
एक्लै माग्दा अधिकार पाउँदिन भनेर
जमात बनाई सकेको छु
मसानघाटमा
खुट्टा भाँचिएका, टाउको काटिएका, मुटु च्यातिएका
समग्रमा मन फाटेका मसानहरुको ।

कहिलेकाहिं मन बुझाई आफ्नो देशलाई हेर्न खोज्दा
देख्छु सगरमाथाको शिखरमात्र डुब्न बाँकि
र तैरी रहेछन्
बुद्धका वाणीहरु डुबेको मेरो देशमाथि ।

सिमि लहरामा झुन्डिए सरि झुन्डिएका तिम्रा चाहाना
पानी बिनाको माछाझै छट्पटिएका तिम्रा सपना
पर्खिबस आमा त्यो डाँडाको चौतारीमा
आउने छु म एकदिन ,मध्यरातमा
कात्रो ओडेर, पुस्तक लिएर
यो राष्ट्र पढाउन ॥

# दिदीलाई चिठी😂!

*भरत खत्री*

प्रिय दिदीमा दर्शन अनि घर परिवारमा साइनो अनुसारको ढोग नमस्कार साथै भान्जामा न्यानो माया अनि मिठो सम्झना ।

यहाँ मलाई सन्चै आरामै छ, त्यहा तपाई हरुलाइ पनि पशुपतिनाथको कृपाले कुशल मङ्गल छ होला भन्ने आसा राखेको छु । भिनाजु सङ्ग त फोनमा कुरा भइ रहन्छ, अर्को महिना नेपाल फर्कन्छु भन्नुभएको छ । यो युग डिजिटल युग हो, हरकोही डिजिटल पत्राचार तथा संवाद गर्छन् । म भने पुरानै शैलीमा पत्र कोर्दै छु, कतिपय यस्ता कुराहरू हुन्छन् जसलाई प्रत्यक्ष व्यक्त गर्न सकिदैन तर लेखेर शव्द द्वारा सजिलै र सहज ढङ्गले प्रस्तुत गर्न सकिन्छ । यहीँ सहजता लाई महसुस गर्दै भान्जाको लागि यो चिठी लेख्दै छु । हामीले सुनेका कतिपय कुराहरू हामी छिट्टै बिर्सन्छौ तर पढेका र अबलोकन गरेका कुराहरू भने अलि दीर्घ कालिन हुन्छन् । हुन् त दिदी, म भन्दा तपाईं, उमेरले जेठी अनि बुद्धिमान र पाकी हुनुहुन्छ । तर पनि दिदी, जसै भान्जाको विद्यालय जाने तथा नयाँ कुराहरू सिक्ने उमेर बढ्दै जाँदै छ, म भित्र उत्साह जाग्दै छ । किनभने बच्चाहरु भनेका काचो माटो हुन्, हामीले जस्तो किसिमको आकार अनि प्रकारमा ढाल्छौ, उनीहरू उस्तै बन्छन् । बच्चाहरु भनेका भोलिका कर्णधार हुन्, बच्चा हरु भनेका भोलिका शिक्षक हुन्, भोलिका आर्मी प्रहरी हुन्, भोलिका डाक्टर पाइलट हुन्, भोलिका पत्रकार लेखक हुन्, भोलिका प्रोग्रामर कोडर हुन्, भोलिका कृषक, भोलिका ड्राइभर, भोलिका प्रधानमन्त्री, भोलिका वैज्ञानिक, जति पनि अहिले हाम्रो देशमा फरकफरक क्षेत्रहरुमा नागरिक छन्, आजका बच्चा भोलि हामी जस्तै जिम्मेवार नागरिक हुन् । यीनीहरु लाई राम्रो संस्कार र राम्रो शिक्षा दीक्षा दिनु हाम्रो कर्तव्य हो । कुनै पनि काम सानो ठुलो हुँदैन, कुनै पनि मानिस उचो निचो हुँदैन भन्ने जस्ता विविध कुराहरू बच्चालाई भनेर सचेत बनाउनु हाम्रो दायित्व हो ।

आफू सङ्ग भएका बस्तुहरु अरुलाइ पनि दिनुपर्छ, बाडिचुडी गर्नुपर्छ भन्ने गम्भीर बिषय सिकाउनु पनि आजको आवस्यकता हो । जानीनजानी हामी र हाम्रो समाजले हरेक क्षेत्रमा पर्खालहरु बनाएका छौं । यसलाई भत्काउनु पनि आजको आवश्यकता हो ।

एउटा बैज्ञानिक एक्सपेरिमेन्टमा बैज्ञानिक हरुले पाँच बादरलाइ एउटा पिन्जडामा राख्छन् , पिंजडा भित्र एउटा भर्र्याङ र भर्र्याङ्को माथी पाँच वटा केरा राखिन्छ । ति पाँच बादर केरा खानलाई भर्र्याङ माथी चड्न खोज्छन्, जसै चड्न खोज्छन् माथिबाट चिसो पानी बर्साइन्छ । त्यसपछि बादर हतारहतार तल झर्छन, पानी पनि पर्न बन्द हुन्छ । त्यहाँ भएका बादर एकपछी अर्को गर्दै भर्र्याङ चड्ने कोसिस गर्छन् तर जति पटक माथी चढ्न खोज्छन् माथी बाट चिसो पानी बर्सिन्छ । त्यसपछि बादर हरुले के निर्णय गर्छन् भने त्यहाँ माथी जान खोज्यो भने माथी बाट चिसो पानी आउछ । त्यसैले त्यसपछि जुन बादर केरा तिर जान खोज्छ त्यहा भएका सबै बादरले उसलाई त्यहाँ बाट झारेर कुट्न थाल्छन् । बैज्ञानिकले त्यहाँ बाट एउटा पुरानो बादरलाई बाहिर निकाल्छन र एउटा नयाँ बादरलाई त्यहाँ राख्छन् , यसपटक बैज्ञानिकले चिसो पानी झार्न बन्द गर्छन् । जसै त्यो नयाँ बादरले केरा देख्छ, उ हतारहतार चढ्ने कोसिस गर्छ । त्यो देखेपछी त्यहाँ बसेका चार बादरले त्यसलाई त्यहा बाट तल झारेर पिट्छन । त्यो नयाँ बादरलाई केही थाहा हुन्न किन यस्तो भइ रहेको छ , उसले किन पिटाइ खाइ रहेको छ । फेरि त्यो नयाँ बादर भर्र्याङ्मा चड्न खोज्छ फेरि पनि त्यसलाई पहिले जसरी नै कुटिन्छ । त्यसपछि त्यो नयाँ बादरले बुझ्छ कि, माथी चढ्न मनाही छ, यदि कोहि अर्को चढ्न खोज्यो भने त्यसलाई पनि माथी चढ्न दिनु हुँदैन तर उसलाई यो थाहा हुन्दैन कि, किन चढ्न रोक लगाइएको छ । फेरि बैज्ञानिकले त्यस पिन्जडा बाट पुराना चार बादर मध्ये एउटा बादरलाई पिन्जडामा बाट बाहिर निकालेर नयाँ बादर राखिदिए । उसले पनि पहिलेको बादरले जस्तै चड्न खोज्यो, पहिलेको बादरले जस्तै पिटाइ खायो, फेरि चढ्न खोज्यो फेरि त्यसैगरी पिटाइ खाएपछि उसले पनि यो बुझयो कि भर्र्याङ्मा चढ्न मनाही छ, अरुलाइ पनि चढ्न दिनु हुँदैन । त्यसपछि बैज्ञानिक हरुले त्यहा भएका तीन पुराना बादरलाइ पनि एकएक गरेर बाहिर निकाले । अब त्यहाँ भित्र सबै नयाँ बादर थिए तर पनि कसैले माथी चढ्ने कोसिस गरिरहेका थिएनन् । किनभने तिनीहरु, सबैको दिमागमा के बसेको थियो भने भर्र्याङ चढ्नु महानी छ, र चढ्न खोज्यो भने पिटाइ खाइन्छ तर तिनीहरु लाई यो थाहा थिएन कि किन चढ्न महानी छ । जबकी त्यहाँ अहिले चिसो पानी बर्साइएको थिएन तर पनि कोहि चढ्ने कोसिस गरिरहेका थिएनन् । यदि उनीहरुले चाहेको भए माथी चढेर केरा निकालेर बाढेर खान सक्थे । यस्तै धेरै प्रथा र बिश्वासहरु हाम्रो समाजमा पनि बनेका छन्, जुन प्रथाका कारण हरु उहिले नै सकिए, त्यस्तै बिचारहरु पनि सकिए तर पनि हामी हरुले ती प्रथा र प्रचलन अहिले सम्म मानदै आएका छौं । किन, भन्ने कारण सोध्दैनौ, प्रश्न गर्दैनौं, तर बच्चा हरुले जिज्ञासु हुन्छन् , उनी हरुले प्रश्न गर्छन् तर हाम्रो समाजले परिपक्व उत्तर दिन सक्दैन । केही सोधखोज नगरी कि त पुरानै शैलीमा रुढीबादी उत्तर दिन्छौं, कि त भन्दै भन्दैनौ । नयाँ पुस्तालाई पनि यहीँ सिकाउदै छौं, त्यहीँ भएर कुनै पनि नयाँ कुरा सिकाउनु अघि नकारात्मक कुरा भन्दा पनि सकारात्मक कुरामा बढी जोड दिएर भान्जालाइ नयाँ कुरा सिकाउनु है...दिदी ।

हाम्रो समाजमा असफलता लाई राम्रो मानिदैन, तर बास्तबमा असफल हुनु भनेको राम्रो कुरा हो, फेल भएर केही नसिक्नु चै बल्ल नराम्रो कुरा हो । त्यसैले असफलता नै सफलताको प्रतीक हो भनेर चिन्न सिकाउनुहोस ।

हात अनि चिना हेराउन तपाई ज्योतिषी कहाँ जानू हुन्छ होला । ज्योतिषीले भनेका राम्रा र नराम्रा दुबै भबिस्यमा घट्न सक्ने काम हरु भन्दै तपाईंले "त...त भबिस्यमा यस्तो हुन्छस रे" भन्नू हुन्छ होला । अज बढी ज्योतिषीले भनेका नकारात्मक कुरालाई धेरै ध्यानमा राख्दै दिनहुँ त्यहीँ शब्द दोर्याउनु हुन्छ होला । यसको लागि हाम्रो मनले कसरी काम गर्छ भन्ने बुझ्नु जरुरी छ, किनभने यो पुर्ण रूपमा बैज्ञानिक र तथ्यपुर्ण छ । मानव प्राणी सङ्ग दुई किसिमका मन छन् , एउटा चेतन मन अनि अर्को अवचेतन मन हुन्छ । चेतन मन भनेको

यदि कुनै पनि बस्तुलाई देखेपछि, यो के होला, कसरी काम गर्छ होला तथा लडाइँ झगडा अनि सकारात्मक र नकारात्मक कुरा छुट्याउन सक्ने मन हो । अबचेतम मन भनेको चेतन मन द्वारा कुनै पनि शुचना दिनहुँ लामो समय सम्म पठाउछौ भने त्यो अवचेतन मन हो, यसले के ठिक के बेठीक छुट्याउनु सक्दैन बरु यसले बानीको रूपमा काम गर्छ । यसले गर्ने प्रमुख काम भनेको हाम्रो पाचन क्रिया, रक्तसञ्चार तथा मुटु धड्काउनु जस्ता धेरै स्वचालित कामहरू हुन् । अबचेतन मन भनेको सबैभन्दा प्रमुख हो किनभने यसले असम्भव कामलाई सम्भव बनाउछ , यो मनको प्रयोग धेरै बैज्ञानिक, लेखक, कबि, चित्रकार हरुले गरेका हुन्छन् । यो रचनात्मक र काल्पनिक दुबै हुन्छ । यसको सम्बन्ध नकारात्मक कुरा दिनहुँ भन्ने सङ्ग सिधा रहन्छ, त्यसैले तपाईंले यदि कुनै नकारात्मक कुरा भान्जालाइ दिनहुँ भन्न लाग्नु भयो भने त्यो कुरा भान्जाको मनले सत्य स्विकार्न थाल्छ । मलाई लाग्छ तपाईंले थ्री इडिएट फिल्म हेर्नू भएको छ, त्यहा एउटा डाइलग छ जुन डाइलग भन्नू भन्दा पहिले छातिमाथी हात राखेर "आल इज वेल" भन्नू भनेर आमिर खानले आफ्नो साथीहरु सुनाउछन् । डाइलग पछाडी एउटा सानो कथा छ , कथा के हुन्छ भने अमीर खानको गाउमा एउटा पाले हुन्छ । उसले राती सबै सुत्नु भन्दा पहिले, सधै चिच्याएर "आल.... इज वेल" भन्छ त्यो सुनेपछि गाउँला सबै मान्छे ढुक्क भएर सुत्छन । एकदिन राती चोर आउँछ र गाउँमा चोरी हुन्छ, त्यसपछि त्यहाँ पाले सङ्ग कुरा गर्न जादा थाहा हुन्छ कि । त्यसले त रातिमा आँखा नै देख्दो रहेनछ, अनि आल इल वेलको पावर बारे त्यो फिल्मको हिरोले थाहा पाउछ । आफ्ना साथीहरुलाइ यहीँ कथा सुनाउदै फिल्ममा आमिर खानले भन्छन् त्यो दिन मैले एउटा कुरा थाहा पाए हाम्रो मन छ नि, यो एकदम डरपोक छ त्यसैले यसलाई बेकुफ बनाएर राख्नु पर्छ । यो फिल्मको डाइलग सिधै गएर अबचेतन मन सङ्ग जोडिन्छ त्यसैले अबचेतन मनलाई भनेर हामी जति पनि असम्भव कामहरु पनि सम्भब बनाउन सक्छौं भान्जाले नि सक्नु हुन्छ । त्यसैले बच्चाहरुलाइ कहिले पनि नकारात्मक कुराहरु नभन्नुहोस नसिकाउनुहोस किनकि बच्चामा सुनेका र देखेका घट्नाहरु हाम्रो जीवनको अन्तिम समय सम्म रहन्छ । केही कुरा सिकाउनु पर्यो भने चित्र द्वारा प्रस्तुत गर्नुहोस् । किनभने हाम्रो दिमागले शब्दमामा हैन चित्रमा सोच्छ ।

यो भान्जालाइ जस्ताको त्यस्तै सुनाइ दिनु है दिदी,
सुर्यलाई माया गर्नुहोस् किनभने यसले हामीलाई उज्यालो दिएको छ, असफलता लाई माया गर्नुहोस् किनभने यसले ज्ञान दिन्छ, पुरस्कार लाइ स्वागत गर्नुहोस् किनभने यो तपाईंको मेहनत हो, धनी लाई माया गर्नुहोस् किनभने यिनी हरु एकदम कम छन्, गरिब लाई माया गर्नुहोस् किनभने यिनी हरु एकदम धेरै छन्, आफू भन्दा ठुला लाई माया गर्नुहोस् किनभने उनी हरु बुद्धिमान छन्, आफू भन्दा साना लाई माया गर्नुहोस् किनभने उनी हरु मायालु छन्, कुरुप लाई माया गर्नुहोस् किनभने उनीहरुको मन शान्त छ । कसैलाई दोष दिने नसिकाउनुहोस किन भने तपाई सङ अरुको कुरा काट्ने समय छैन ।

बाल्य अवस्था भनेको, केहि देख्ने बितिकै, के हो ? किन हो ? कसरी चल्छ ? किन चल्छ ? भन्ने जस्ता प्रश्नहरु जाग्ने, हरेक कुरा हरु जान्न खोज्नु साथै जिज्ञासु हुने समय हो । यो बेला लागेको भोक बाबाआमा र घरपरिवारले सकेसम्म मेटाउने कोसिस गर्नु पर्छ, यसले बच्चा हरुको तर्क शक्ति बढाउछ, यसले बच्चाको मस्तिष्कमा भएका नयाँ न्युरोन लाई सुचारू र बढी सक्रिय बनाउदछ । बच्चामा हाम्रो दिमागले पचास भन्दा बढी भाषा सजिलै सिक्न सक्छ । नयाँ भाषा सिक्नुको पछाडि पनि धेरै पाइदा छन्, नयाँ भाषा सिक्नाले मान्छे अलि बढी क्रीएटिभ हुन्छन् साथै जति धेरै भाषा उतिकै धेरै प्रसनालिटी हुन्छ । नयाँ भाषाका कारणले धेरै रोगबाट मुक्त हुन सकिन्छ, डिप्रेसन तथा एन्जाएटी बाट बच्न सकिन्छ ।

बच्चामा हामी नेपाल बाट भारतमा गएर । छ महिना मात्र पढेका थियौं , छ महिना पछि परिक्षा भएर नतिजा आयो, नतिजा आश्चर्यजनक थियो, सबैलाई पत्याउनै गाह्रो पर्यो । छ महिना अरुको भाषा पढेर त्यहींका मातृभाषी लाई जितेर तपाईंले स्कुल टप्नु भएको थियो , धन्न म पास भएछु । त्यो देखेर त्यहाँका स्थानीय वासिन्दाले भनेका थिए ...वाह कति राम्रा बच्चा, त्यो सुनेर हामी सङ्गै जानू भएको पापाको छाती फुलिएर आएको थियो । बडो अचम्मले हामीले एकपछि अर्को क्लास जम्प गरेका थियौं । हामी नेपाल आएपछि पनि, छ महिना पढेर म तेस्रो भए, त्यो देखेर भारतमा जस्तै नेपालमा अरुले हाम्रो कुरा गरेका थिए । हामी जति भाषा सिक्छौ, त्यतिकै भाषामा सोच्न पनि सक्छौं । त्यसैले भान्जालाइ अरु कुनै भाषा पनि पढाउने कोसिस गर्नुहोस् । बच्चाले गितार, पियानो, मादल, बासुरी जस्ता संगीतका बाजाहरु तुरुन्त सिक्न सक्छन्, यी सिक्नुको धेरै फाइदाहरु छन्, बच्चा ठुलो भएपछि जब तनाव लिन थाल्छन् त्यो बेला संगीतले ठुलो काम गर्छ । एउटा अध्ययन बाट संगीतले मानिस लाई तनाब मुक्त बनाउछ भन्ने भटिएको छ, त्यसतै बच्चामा नयाँ सीप वा बाजा सिक्दा हाम्रो दिमागमा भएका नयाँ न्युरोनहरु जुन करोडौं अर्बौंमा हुन्छन् तिनी सक्रिय हुन्छन् । त्यसैले भान्जालाइ भान्जाको रोजाइ अनुसारको बाध्य बाधनका सामाग्री सिकाउनु जरुरी छ ।

यी कुराहरु गर्दा गर्दै हाम्रो बाल्यकालको याद आयो दिदी, हामी कति धेरै जिज्ञासीला थियौं । पापाले हरेक आइतबार पंजाब केसरी र बाल केसरी भन्ने अखबार हाम्रो लागि राख्दिनु हुन्थ्यो, हामी त्यो पज्जल मिलाउन, कसको जन्म दिन परेछ, कथा र चित्रकला हेर्न कति खोसाखोस गर्थिम ।

एकपटक एउटा अन्तर्वार्तामा अलवर्ट आइनसटाइनलाई एउटा पत्रकारले प्रश्न सोध्छ, - बच्चालाई बुद्धिमान बनाउन के गर्नु पर्छ ।

- उनले जबाफ दिन्छन् कथा सुनाउनु पर्छ । उसले फेरि सोध्छ

- अज धैरै बुद्धिमान बनाउन के गर्नु पर्छ ।

उनले भन्छन्

- अज बढी कथा सुनाउनु पर्छ ।

फेरि पत्रकारले सोध्छ

- जिनियस बनाउन के गर्नु पर्छ ।

आइनटाइन मुसुक्क मुस्कुराउदै भन्छन्

- धैरै कथा सुनाउनु पर्छ ।

बचपनमा सुनेका कथाले हाम्रो जीवनमा प्रत्यक्ष प्रभाव पारेको हुन्छ । त्यसैले दिदि प्रत्येक दिन तपाई स्वयं धैरै भन्दा धैरै बालकथा र अन्य सकारात्मक कथाहरु पढेर भान्जालाइ सुनाउनु होस् । साना तिना काम गर्दा सङ्गै मिलेर गर्नुहोस्, भान्जाले पढे बापत रिवार्ड दिनुहोस् , गलती गरे बापत फिर्ता गर्नुहोस् । उदाहरणको लागि भान्जाले पढ्नु भयो अथवा राम्रो काम गर्नु भयो भने दस रुपैया पुरस्कार स्वरुप दिनुहोस् । यदी पढ्नु भएन वा ठुला बडा सङ्ग मुखमुखै लाग्नु भयो भने आठ रुपैयाँ फिर्ता गर्नुहोस् । यस्तो गर्नाले भान्जाले पैसाको महत्त्व र पैसा सित्तैमा आउदैन यसको लागि मेहनत गर्नुपर्छ भन्ने बुझ्नुहुनेछ । साना तिना जिम्मेवारी हरु भान्जालाइ आफै गर्न दिनुहोस् त्यसमा तपाइले नसघाउनुहोस । यसले गर्दा भान्जाको आत्मबल बढ्ने छ, पछि अप्ठ्यारो पर्दा सजिलै सामना गर्न सक्नु हुनेछ । जीवनमा सधैं सकारात्मक भएर अघि बढ्नु पर्छ भनेर भनी राख्नुहोस ।  कोहि अरु बच्चाको सामु गाली अथवा थप्पड नहानुहोस, यसले भान्जाको बैइज्ज गरेको जस्तो हुन्छ, बाल मानसपटलमा यहीँ छाप बस्छ, त्यसैले घरमा एकलै राखेर भन्नुहोस् यसले गर्दा भान्जाले तपाईंको पनि इज्जत गर्नु हुनेछ ।

हामी सानो हुदा रेडियो नेपाल पंजाब सम्म सुन्निथ्यो । एकदिन तपाई र मैले रेडियो भित्रका मान्छे लाई भेट्नु पर्यो भनेर रेडियो फुटाएर भित्र हेरेका थियौं, टिभीका चक्का भाचेर भित्र मान्छे हेर्थिम, क्यासेट खोलेर हूहूहू गर्ने धागो बनाएर टास्थीम, गाउँ भरिका बच्चा जम्मा गरेर घरमा राखेका कोकाकोला र जुस सकेका थियौं । हामी नेपाल बस्दा हजुर आमा तथा गाउँका बुडापुरानाले बिहान हिद्डा कतै जमीन बज्यो भने त्यहाँ मुनि पुराना मान्छेले पैसा गाडेका हुन्छन् भन्थे, खाना नखाइ खन्यो भने भेटाइन्छ भन्थे । हाम्रो हजुरबुबाले पनि गाड्नु भएको छ रे, भन्ने गर्थे । हामीले दोकान बाट पैसा चोरेर बालुवामा गाडिम अर्को दिन बिहानै खाना नखाइ त्यहाँ गएर उफ्रेको केही बजेन अनि पैसा पनि कता सर्किएछन भेटिएन, त्यो देखेर हामी दुई बहिना कति निरास भएका थियौं । एकफेर बाल्यकाल तर्फ जाउ है दिदी,

**दाइको परिक्षण**

दाइले बाइक चलाउन खोज्दै हुनुहुन्थ्यो, म दाइको वरपर घुम्दै थिए । दाइले त्यतिकैमा नयाँ कुरा परिक्षण गर्ने सोच्नु भएछ, मलाई मेरो औंला साइलेनसरको प्वाल भित्र राखेर धुवाँ बन्द गर्न लगाउनु भयो अनि बाइक स्टार्ट गर्नु भयो । त्यसपछिको भयावह स्थितिको त तपाई हरुले अवश्य पनि कल्पना गरि सक्नु भयो होला ।

**तपाईंको परिक्षण**

हाम्रो घरमा घाँस काट्ने मेसिन थियो, सधैं जसो त्यहा घाँस काटेर सानो बनाउनेको भिड हुन्थ्यो । कसले कसरी काट्छ भनेर हामीले सधैं हेर्थिम, एकदिन मौका मिल्यो र तपाई र म त्यहाँ गयौं । तपाईंले तैले हात यहाँ राख, म मेसिन चलाइछु भन्नू भयो, मैले निर्धक्क सङ्गले मेरो कान्छी औंला राखे । एकैछिनमा तपाईंले मेरो औंला काटिदिनु भयो ।

**मेरो परिक्षण**

गाउँ बाट हजुरआमा जानू भएको थियो, हजुरआमा म दिदी अनि दाइ भएर रेल्वे तिर जाउ भन्ने सल्लाह गरिम । त्यहाँ बेल पनि खान पाइने अनि रेल पनि देख्न पाइने भएकाले कसैले हुन्न भन्ने भएन । रेल्वे लाइनमा धेरै मान्छे लाई मारेको रेलले टुक्राटुक्रा बनाएको घटना खुबै सुन्थ्यौ, त्यसैले मलाई प्रयोग गरेर हेर्नू थियो । रेल्वेमा गएर घुम्दै थियौं, पारितिर बाट रेल हामी तर्फ आउदै थियो म रेललाइनमा गएर रेल हिड्ने बाटो माथि हात राखेर घुप्टो मन्टो लगाएर सुते । दाइ हजुरआमा अनि दिदि म भन्दा अलिकति टाढा हुनुहुन्थ्यो, दाइ चिच्चाउदै म तर्फ दौडेर आउनु भयो मलाई उठाएर तलतिर फाल्नु भयो, दुइभाइ लडेर तल पुग्यौं । उठ्दा हातभरी चोटै चोट लागेलो थियो, हजुरआमा र दिदिले भने आफुहरु लाई धेरै नजिक भएकाले रेलको हावाले उडाएको भनेर गफ दिनु भयो ।

**सामुहिक परिक्षण**

केही दिन अघिमात्र हाम्रो स्कुलमा एउटा जादुगर आएर गएको थियो । त्यो देखेपछि मैले जादु देखाउछु भन्दै, तपाइँलाई करेन्टका दुई नाङ्गा तार मुख भित्र राख्न भनेर स्विचअन गरे,
तपाईंको मुख र दात बाट रगत आयो ।
त्यसपछि डरले हतार हतार स्विचबन्द गरेको थिए ।

हाम्रो घर अघि तीन वटा आपका भयंकर रुख  थिए, तिनको नजिकै अम्बा र जामुनका पनि रुख थिए । आपको रुखमा कागले गुड बनाएको थियो,  कागले, हामीले खाएर फालेका रोटीका टुक्रा टिपेर गुड्मा बसेर खान्थ्यो । एकदिन हाम्रो सल्लाह भयो, कागको गुड हेर्ने । त्यसपछि  म आपको बुटामा चढे अनि गुडमा हेरे कागका अण्डा रहेछन् । रुखमै बसेर अण्डा खेलाउदै थिए, एक्कासि काग आयो । अनि मलाई आक्रमण गर्न लाग्यो, कहिले मेरो टुप्पी तान्ने कहिले नाक तान्ने कहिले ठुग्ने गर्दै थियो । म एकदम आतिएर हतार हतार झर्ने कोसिस गर्दै थिए । सायद बिच्चमा आउँदा होला, म त्यहाँ बाट सिधै जमीन तिर झरे, हावामा उडे झैं त लाग्छ, कति बेला जमीनमा खसे पत्तै पाएन । त्यो ताका मेरो ढाड र शरीरको अन्य भागमा पिलो आएको थिए । म बिउझिदा कुल्लर बाट चिसो हावा म तर्फ आइरहेको थियो । म सङ्गै तपाईं मलाई हेरेर बसि राख्नु भएको थियो । म होस् मा आएपछि तपाईंले भन्नू भएको थियो । पापाले उठाएर मलाई घरमा ल्याउनु भएको रे, मम्मी पनि आतिएर हेर्न आउनु भएको थियो रे, म जाग्दा भने मम्मी हाम्रो लागि चिया र बिस्कुट ल्याउन पसल जानू भएको थियो । त्यो दिन देखि म पिलो मुत्त भए भने काग हाम्रो दुश्मन भयो । हामी दुई भाइबहिना लाई जहाँ देख्यो त्यहीँ आक्रमण गर्न आइ हाल्थ्यो । एकताका हाम्रो मम्मी सित बाहेक, त्यो काग कसै सित डराउने थिएन, ठुङ्न आइ रहन्थ्यो ।

**छोटे डन**

हामी बस्ने एरियामा हामीले आफुलाइ डन भन्थ्यौ, त्यहा हामी सित पङ्गा लिने एकजना केटि मात्र थी । उसको टाउकोमा कहिले कपाल हुने थिएन त्यसैले गन्जी भनेर जिस्काउथ्यौ तर उसको एउटा गतिलो हतियार थियो । जसको अगाडि पर्न कसैको हिम्मत हुने थिएन त्यो हतियार थियो, त्यसैको घर अघि बस्ने नालीको भ्यागुतो । भ्यागुतो हातमा समाएर हाम्रो मुखमुखमा ल्याएर हाम्रो सातोपुग्लो खाइदिन्थी । हामी स्कुल जाने बाटो त्यसैको घर अघिको थियो । सधैं हामीलाई नै कुरेर बसिकी हुन्थी, कहिलेकाही त्यसलाई झुक्याएर पिटेर स्कुल जान्थ्यो भने कहिले काहीं हाम्रो झोलामा भ्यागुतो राखेर हामीलाई खुब तर्साउथी । त्यसरी नै दिनहरू बित्दै थिए, हाम्रो घर नजिकै बिहार बाट घर भाडामा बस्ने मान्छे आएका रहेछन् । तिनीहरुका हामी जत्रै छोराछोरी थिए, सधैं घर बाहिर आएर भात खान्थे । त्यो देखेपछि हामी चिच्याउदै , "पैयारानी चावल खान्दी बाहार आके चाडु मार्दी अन्दर जा के" भन्थ्यौ । यसैको कारण तिनीहरु सङ्ग हाम्रो दुश्मनी बढेको थियो ।

एकदिन तपाईंको भेट उनीहरु सङ्ग भएछ, फाइट पनि परेछ । तपाईंले हतारहतार आएर मलाई भन्नू भयो । हामी दुई बहिना भएर लड्न जानू पर्छ भन्दै  त्यहाँ गयौं, जाने बितिकै फाइट सुरु भयो । हामी दुई दिदीभाइले भक्कु कुटेर घर पठाइ दियौं । मनमा एकदम गौरवको सोच आइरहेको थियो, एकातिर मम्मी र पापाको डर पनि लागेको थियो । मम्मी पापाले थाहा पाउनु भयो भने हाम्रो छालाकाड्ने त पक्का नै थियो । त्यसैको बेलका घरका सबै सदस्य बाहिर बसेर टिभी हेर्दै थियौं । मम्मीले रोटि बनाउदै हुनुहुन्थ्यो । हाम्रो घर बाहिरको मेन ढोका कसैले बजायो । पापा गएर ढोका खोल्दिनु भएको मात्र के थियो , बाहिर बाट आवाज आयो । हाएहाए ऐ क्या हाल... कर्दिया रे हमारे बच्चे का ? यिनका मल्मपट्टी कौन करेगा, और मेरे बच्चेका नाक और कानका सोना कौन देगा ?

त्यो देखेर मम्मी पापा अचम्म पर्नु भयो, त्यसपछि यो कसले गऱ्यो भनेर सोच्नै परेन । बाहिर लडाइ गरेको ठाउँमा गएर नाकको फुलि र कानका मुन्द्रा खोज्न लगाउनु भयो, जति खोज्दा पनि भेटिएन ।
नभेटेपछि पापाले भन्नू भयो

- ल... अब घर हिडौ जाउ ?

तपाईं लाई थाहा थियो घरमा आज भक्कु पिटाइ हुनेवाला छ त्यहीँ भएर तपाईंले जान मान्नु भएन । पापाले तपाईं लाई रोडमा लतार्दै घरमा ल्याउनु भयो । म सानो भएको र तपाईंको सल्लाहमा लागेर त्यस्तो गरेको भन्दै मलाई केही गर्नु भएन, म पिटाइ खान बाट जोगिए तर तपाईंले पिटाइ खाएको देखेर म पनि खुब रोए । पापा र मम्मीले त्यसको क्षतिपूर्ति तिर्नु भयो ।

**हाम्रा खोजहरु**

हाम्रो पालमा फ्री च्यानल भनेको दुरसचार मात्रै थियो । हरेक आइतबार मात्र एउटा सादा फिल्म, मिक्की माउस अनि एउटा रङ्गिन फिल्म आउथ्यो । हामी फिल्म भनेसी हुरुक्कै हुन्थिम, नेपाली फिल्मका चक्का पनि सबै हेरेर सकेका थियौं । दिदिभाइ बसेर एकदिन बिचार गर्‍यो, हाम्रो घर नजिकै छतबाट केवल लगिएको थियो । केवलको तारनजिकै गएर बस्यो भने त्यहाँ वरपर हिड्ने मान्छेले सङ्का गर्थे । त्यहीँ भएर छतमा जानू पनि उचित हुने थिएन । एकदिन मैले छतमा गएर, सानो तार केवलको तारबाट हाम्रो एनटिनामा जोड्ने निर्णय गरे । तपाईंले पनि हुन्छ भन्नुभयो । सानो तार जुन झट्ट आखाले देख्न सकिने थिएन, त्यहीँ तार लगेर एन्टिनामा जोडे । जोडिसकेपछी त्यहाँ वरपरका मान्छे लाई देखाउन चिच्याउदै शान्ती आयो भन्दै एनटिना घुमाए । तपाईंले आयो आयो झर भन्नू भयो । त्यसपछि त, जी-सिनेमा, गोल्ड स्टार अनि म्याक्सको बाँस हुन् थाल्यो । त्यति धेरै च्यानल टिपेको देखेर मम्मी पापा अनि हाम्रो घरमा आउने नातेदार हैरान बनेका थिए । सबैको एउटै कुरा थियो एन्टिना नजिकै बाट केबल लगिएकाले यसतो भएको । तपाई र म भने मख्ख थियौ । लगभग डेढ वर्ष जति हामीले त्यो फ्री केवल चलायौ ।

**ट्याटु मास्टर**

पापाको हातमा ॐ लेखिएको ट्याटु थियो, त्यसैको माथी बाघमाथी बसेकी दुर्गाको ट्याटु थियो । मैले धेरै पटक पापालाइ मलाई पनि ट्याटु हान्दिनु भनेर कराएको कराए गर्थे । खादा, बस्दा, उठ्दा, स्कुल जादा जति बेला पनि त्यही भनेर हैरान बनाउथे । एकदिन हाम्रो दोकानमा हात्ती आएको रहेछ, मम्मीले मलाई लिन घरमा आउनु भयो । हात्तीलाई देख्न त पहिले पनि देखेका थियौं तर हात्ती देख्ने बितिकै खुब डरलाग्थ्यो । भयंकर शरीर, लामो सुड अनि पसल पसल पैसा माग्दै हिडेको देखेर, कतै हाम्लाइ पनि भेटायो भने सुडले समाएर माथी लैजान्छ अनि हामी सङ्ग पैसा माग्छ भन्ने डर मनमा आइहाल्थ्यो । तर त्यो दिन मम्मीले मलाई हात्ती अघि राख्नु भयो । हात्ती र मेरो त्यो पहिलो आम्नेसाम्ने थियो । म चिच्याएर रुन थाले, पापाले हात्ती वाला लाई बोल्दाउदै भन्नू भयो, यसलाई नि त्यति तपाई माथी लगेर बसाउनुहोस, हात्तीवालाले मलाई हात्तीमाथी राख्यो, म चिच्याएर रुदै हात्तीलाई आफ्ना साना औंलाले चिम्ट्न लागे । हात्तीले आफ्नो सुड म तर्फ ल्यायो... म झन चिच्याए । त्यसपछि हात्ती बाट मलाई तल झरियो, त्यो दिनभरि नै म रोएको रोए गरे । पापाले मलाई फकाउन साइकलमा राखेर, खेलाउन किन्न लगाउनु भयो अनि म शान्त भए । त्यसदिन देखि जब पनि मैले ट्याटुको कुरा गर्थे मलाई हात्तीमा चढाउने भनेर तर्साउनु हुन्थ्यो । दिनहरु जति बित्दै थिए, मलाई ट्याटु हान्ने रहर झन्झन् जाग्दै थियो । एकदिन स्कुलको कक्षा कोठामा बसेर, ज्यामितीमा भएको कम्पासले मेरो हातको पछाडि ॐ लेखे ।

मैले लेखेको ॐ क्लासमा सबैलाई देखाए सबैले जनाले अचम्म मान्दै, आफुलाई पनि हान्न रहर भएको र त्यो हान्ने काम पनि मै बाट हुनु पर्ने भन्ने भयो । त्यसपछि मैले कसैको हात पछाडि, कसैको हातको नाडिमा जजसको जहाँ जहाँ इच्छा हुन्छ त्यही त्यही हानिदिए । एकजना ग्रुप्रीत भन्ने साथी थियो त्यसको हातको नाडीमा हानेको, उसको नसामा परेछ । अर्को दिन उ स्कुल आएको थिएन, हामी सबै आआफ्नो ट्याटु सो गर्दै थियौ । कक्षा कोठामा म्याम आउनु भयो र भन्नू भयो । हिजो स्कुल बाट गएदेखी ग्रुप्रीतलाई ज्योरो आएको अनि रातिनै हस्पिटल भर्ना गरिएको छ । उसको हातको इन्फेक्नले गर्दा उ बिरामी भएको भन्ने जानकारी डाक्टरले दिएको भनेको छ । यहाँ हिजो कम्पासले ग्रुप्रीतको हातमा कसले लेखेको हो भने त्यति बेला दिदी तपाईं मोनिटर हुनुहुन्थ्यो । तपाईंको डरले र आफ्नो हातमा नि त्यस्तै ट्याटु भएकाले कोहि बोलेनन् । म्याम रिसले चुर हुँदै सबैलाई गाली गर्न लाग्नु भयो अनि सबैको हात चेक गर्नु भयो । एकपछि अर्को सबै केटाहरुको हातमा ट्याटु देखेर म्याम पुरै सक हुनुभयो । सबैलाई पालोगरी गरि अफिसमा बोलाउनु भयो, त्यहाँ अचम्म त के भयो भने कसैले पनि आफ्नो मुख खोलेनन् । त्यसपछि म्यामले सबैलाई स्कुल पढ्न नदिने भन्नू भयो । हामी सङ्गै पढ्ने नेपाली साथी सुशील र सन्दीप थिए । सन्दीप त्यो दिन स्कुल आएको थिएन  । मैले मौका समाएर उसैले गरेको हो भने, अरुले नि हो मा हो थपे । सन्दीपले पनि म बाट इन्सपाएर भएर तीन जनाको ट्याटु हानेको थियो । सन्दीप लाई त्यो स्कुल भर्ना गरिदिएको हाम्रै घरबाट थियो, त्यो सुनेपछि म्यामले मलाई घरमा गएर मम्मीलाई बोलाएर आउनु भनेर पठाउनु भयो । अब मलाई फर्साद पर्यो, बोलेपछी न शब्द फिर्ता गर्न सकिने, न मैले जिस्केर भनेको भन्न मिल्ने । घरमा पापा वा मम्मीलाई भनेर स्कुल लैजानु भनेको, आफ्नो काललाइ निम्तो दिनु जस्तो लाग्यो मलाई । म  गन्जीको घर देखि अलि वर रहेको एकदम फोहोर घरमा बसे , तीस मिनेट जति त्यहीँ बसेर स्कुल गए । स्कुलमा आउनु मान्नु भएन भने, म्यामले तपाईं सङ्ग अर्को दिन सन्दीपको बाबा र तिम्रो घरबाट बोलाएर ल्याउनु भन्नू भयो । अर्को दिन मम्मी पापा अनि सन्दीपको बाबा जानू भयो । पहिले त सन्दीपलाई र मलाई स्कुल बाट रेस्टिगेट गर्ने कुरा भएछ । निकै माफी मागेपछि र फेरि यस्तो गलती फेरि नहुने भनेपछी एकपटकलाई भन्दै स्कुलले माफी दिएछ । त्यो दिन देखी ट्याटुको रहर पनि गयो अनि ट्याटु खोप्ने मन पनि ।

पापाले कुकुर भनेर खेलाउन दिनु भएको कुकुर बादर हो भन्ने थाहा नपाएर , हामी दुई दिदीभाइ लाई घरभरी लखेटेको थियो । त्यसको एकदुई महिना पछि हाम्रो घरमा सानो कुकुर आयो । हामीले कुकुर सित बद्ला लिनुपर्छ भन्दै कुकुरलाई खेत जोतेपछी डल्ला फोर्ने प्रयोग गरिने मेसिनमा राखेर रेटेरेटे पार्यो, कुकुर डराएर त्यहाँ बाट भाग्यो । ठुलो दाउराको झाङ्म मुनि गएर लुक्यो त्यो देखेर । त्यो झाङ्ममा आगो लगाउनु पर्छ भन्दै त्यहाँ आगो लगायौ । त्यो आगो यति ठुलो भयो कि त्यो आगो निभाउन हाम्रो घर नजिकै भएका कम्पनीहरु चन्नी मिल, शुक्ला मिल, जगदम्बा मिल , असोका मिल गाउँ वरपरका सबै मान्छे अनि दमकल आएर बल्लतल्ल आगो निभाए । हामी जौको थुप्रोमुनि लुकेर बसेका थियौ । सबैले आज बहादुरका छोराछोरी आगोमा परेर मरेछन भनेर गए । मम्मी पापाले हामी दुई बहिनालाइ खोजेको खोजे गर्दै हुनुहुन्थ्यो । सबै गएपछि दाउरा मालिक आयो अनि सबै गएको देखेर, हामी दुई बहिना पनि त्यहाँ बाट निसक्यौ । मेरा यिनी दाउरा दुई लाखका हुन् तुरुन्त पैसा दिनु पर्यो भनेर कडिकडाउ गर्दै थियो । एकैछिनमा उसको छोरा आयो अनि बुवालाइ सम्झायो झन्न यिनका छोराछोरी बाचेछन, पैसा अलि पछि दिए पनि हुन्छ । तर बच्चाको नजिक आगो राख्नु हुदैन भनेर धैरै सम्झायो ।

हामी दुई दिदिभाइले सानो बच्चा हुदा गरेका बिठ्याइ गन्न लाग्ने हो भने पुरै पुस्तक नै बन्छ होला । दिदि यसबाट हामीले धैरै कुराहरू आफै सिक्नु पर्छ । भान्जा सङ्ग खेल्ने समय निकाल्नु पर्छ, सबैभन्दा धैरै त कथा कविता अनि पुस्तक पढ्ने बानी लगाउनु पर्छ । आफ्नो कक्षा भन्दा बाहिरका धैरै पुस्तक पढ्ने बानी लगाउनु पर्छ दिदी । यो संसारमा सबैभन्दा मूल्यवान बस्तु केही छ भने त्यो पुस्तक नै हो ।

वैज्ञानिक, मनोबैज्ञानिक तथा खोजकर्ता हरुले अहिलेसम्म बच्चाका बानी व्यबहार, सोच्ने तरिका, बोल्ने तरिका पढ्ने तरिकामा वर्षौं देखी ठुलो अनुसन्धान गरेको छ । त्यो मेहनत अनि तपस्या बाट थुप्रै उपलब्धी हरु हासिल भएका छन् । यी उपलब्धि हरुले हाम्रो जीवन तथा बच्चा हरुको जीवन परिवर्तन गर्नमा अहम् भुमिका खेल्दछ । तिमीले यो गर्नै पर्छ, तिमीले यो खानै पर्छ, तिमी त्यहाँ जान्नै पर्छ, मैले भनेको मान्नै पर्छ, उ फलानोले जस्तै गर्ने पर्छ, फलानो तिमी भन्दा धैरै जान्ने सुन्ने छ, यस्ता वाक्यहरु दिदी तपाईंले नि भान्जालाइ दिनहुँ भन्नूहुन्छ होला । यो सुनेर भान्जाले नि आफुले सकि नसकी गर्ने प्रयास गर्नु हुन्छ होला, सायद तपाईंले तिमी डाक्टर अथवा इन्जिनियर बन्नै पर्छ भन्ने कुरा दिमागमा फिट गर्दी सक्नु भयो होला । वास्तवमा भन्ने हो भने भान्जालाइ डाक्टर भनेको के हो भन्ने थाहा नै छैन ।

कतिपय यस्ता कुराहरू होलान् जुन कुरा भान्जाले गर्ने प्रयास गर्दै हुनुहुन्छ होला । तपाईंले ज्ञानी मान्छेले यस्तो गर्दैनन् थप्पक बस्छन् भन्नू हुन्छ होला । पल्लाघरे सुजनले "क ख ग" पढेको सुनेर तैले त, जति सिकाए पनि जान्दैन्स, उ सुजन लाई हेर त, सबै जानी सक्यो भन्नू हुन्छ होला, अरु केटाकेटी हरु सङ्ग खेलेको देखेर, ऊनी हरु अघि गएर मार थर्काएर वा थप्पड हानेर घरमा ल्याउनु हुन्छ होला ।

म अठार वर्षको हुन लाग्दा, मम्मीले ज्योतिषीका गएर चिनो देखाएर आउनु भएछ, अनि मलाई भन्नू भयो अठार वर्षमा बिहे हुने सम्भावना छ रे, बिहे भयो भने दुख हुन्छ रे, केटी पछि लाग्छे रे, केटी बाट बचेर हिडेस भन्नू भयो । त्यो सुनेपछि, म बाहिर हिड्दा कोही भेटी हाल्यो भने, स्कुलमा कोहि बोल्न आइ हाल्यो भने, हे... बा मलाई नबोलाए हुन्थ्यो भनेर बस्थे । कसैले बौलाइ हाल्यो भने तर्सेर बोल्थे । किन भने त्यहाँ मलाई बिहे भयो भने, पछि के हुन्छ भन्ने कारण थाहा थियो । त्यसैले दिदि तपाइँले पनि भान्जालाइ सम्झाउनु पर्यो भने यस्तै कारण सहित समझाउनु होस् । यसले गर्दा आमा छोराको सम्बन्ध त, राम्रो हुने नै भयो अर्को तिर भान्जाले गलत काम गर्ने बाट आफै सजक हुनुहुनेछ । कहिले पनि कसैसँग तुलना नगर्नुस् बरु तिमिले पनि मेहनत गर्‍यो भने सक्छौं भन्नूहोस् । सधैं कर्ममा बिश्वास गर्न सिकाउनुहोस । मेहनत र लगनशीलता भन्दा ठुलो केही छैन भन्ने कुरा बारम्बार भनिराख्नुहोस ।

अरु सित तुलना गर्नु तथा ऊनीहरुको रुचि बिनाका कामहरू गर्न लगाउनु भनेको बच्चा हरुलाइ आफू प्रति बिश्वास गर्न बाट बन्चित बनाउनु हो, हिनताबोध गराउनु हो । जब कुनै आमाले आफ्नो छोराछोरी लाई कमजोर असक्षम अनि काम नलाग्ने भन्छिन भने बच्चाले आफुलाइ कमजोर सोच्न थाल्छन् । बच्चा हरुको रोल मोडल कि त आमा हुन्छन् कि त बुवा, यदि आमा बुवा बाटै नकारात्मक कुराहरु सुन्न थाले भने ऊनी हरुले आफुलाइ, आफै बिश्वास गर्न छाडिदिन्छन अनि बच्चा हरुको जीवनमा अधोगती लाग्न सुरु हुन्छ । तैले यो गर्न सक्दैनस भन्ने तिर भन्दा पनि तैले यो गर्न सक्छस भन्ने तिर बडि जोड गर्नुहोस् । सकेसम्म बच्चालाई यो संसारमा गर्न नसकिने केही छैन भन्नू पर्छ, उसको ढाड्स बनेर उसको पछि बस्नु पर्छ । यदि केही नयाँ कुरालाई गर्ने कोसिस गर्दै छन् भने तिमी सक्छौं गर गर भन्नू पर्छ, ऊनीहरुमा उत्साह थप्नु पर्छ ।

एउटा परिवारमा बुवा आमा अनि छोराछोरी हुन्छन् । एकदिन अचानक छोरा बिमारी पर्छ, लामो समय सम्म उसलाई हस्पिटलमा राखिन्छ । एकदिन बाबा घरमा आएर उसको आमालाई भन्छ, खै अब मैले बचाउन गाह्रो छ धेरै खर्च लाग्छ रे, टाउकोमा खै केके भएको छ रे । हामी कहाँ बाट त्यति धेरै पैसा ल्याउनु, डाक्टरले नि अब त हाम्रो छोरालाई चमत्कारले मात्र बचाउन सक्छ भनेका छन् । त्यो सुनेर उसकी आमा खुब रुन्छिन । त्यो दृश्य नजिकै बाट सानी छोरीले हेरिरहेकि हुन्छे । आफू सङ्ग भएको पैसाको खुत्रुके बोकेर औसधि पसलमा जान्छे अनि आँखा भरी आँसु पार्दै भन्छे ।

- डाक्टर साब डाक्टर साब, मलाई चमत्कार दिनुहोस् न,

त्यो सुनेर पसले अक्कमक्क पर्छ । त्यो दृश्य औसधि पसल वरपरका सबैले हेरिरहेका हुन्छन् । फेरि उसले भन्छे

- दिनुहोस् न...

औसधि पसले केही बोल्दैन । त्यहीँ नजिक भएका एकजना सज्जन, उ तर्फ आउदै भन्छन् ।

किन नानी, किन चाहियो चमत्कार,

बच्चीले गहभरी आँसु बनाउदै भन्छे,

" मेरो दाइ लाई हस्पिटलमा राखिएको छ, उसलाई चमत्कारले मात्र बचाउन सक्छ रे, त्यहीँ भएर म चमत्कार किन्न आएकी"

त्यो सुनेर त्यो सज्जनले भन्छ तिमी सङ्ग कति पैसा छ ?

बच्चीले आफ्नो खुत्रुक्के जमीनमा फालेर फोड्छे, पैसा यताउता छरपस्ट हुन्छ । एकएक हातमा समाउदै गन्छे एक दुई गर्दै उ सङ्ग जम्मा उन्नाइस रुपैया हुन्छ, त्यति देखाउदै भन्छे

- उन्नाइस रुपैया छ हुन्छ ।

सज्जनले भन्छ

- ओहो उन्नाइस रुपैया किन नहुनु यति पैसा त हो लाग्ने, भन्दै त्यो पैसा आफुले लिन्छ । उ न्युरो डाक्टर हुन्छ उसको दाइको अप्रेसन त्यहीँ उन्नाइस रुपैयामा गरिदिन्छ । छोरालाई निको भएपछि घरमा चार जना बसेर खाना खाइरहेका हुन्छन् त्यतिकैमा उसकी आमले भन्छे

- "तपाईंले त चमत्कार गर्नु भयो नि, कसरी गर्नु भयो" यो सुनेर गहभरी आँसु ल्याउदै उसले भन्छ

- मैले उ...उसले गरेकि हो यो चमत्कार ।

बच्चा हरुले कहिले पनि आफुले गर्न सक्दैन भन्ने मान्न चाहादैन्न । यो कथा मात्र हो, एउटा अपबाद मात्र हो ।

तपाईंलाई कतिको याद छ दिदी, हामी सानो हुदा जामुनका पात टिपेर सानी बहिनी बिमलालाइ दिएर बिस्कुट किन्नको लागी, लालाको दोकानमा पठाउने गर्थिम । बिम्लीले गएर लिएर आउथी हामीले अचम्म मान्थिम । त्यो लालाले बहिनीलाई माया गरेर मिठाइँ दिएको हुन्थ्यो ।

जीवनमा दुई किसिमका मान्छेहरु हुनेछन् एक जस्तो सुकै अप्ठ्यारोलाई पनि सजिलो रूपमा लिन्छन् अनि अर्को थरी हुन्छन्, अलिकति अप्ठ्यारो पर्ने बितैकै मेरो जीवन नै सकियो, म डिप्रेसनमा जान्छु भन्छन् । भान्जालाइ कस्तो बनाउने तपाईंको हातमा छ । यसलाई एउटा कथाको माध्यम बाट प्रस्तुत गर्दै छु ।

एकदिनको कुरा हो थोमस स्कुलबाट घर आए र आमालाई एउटा चिट्ठी दिँदै भने - ‘आमा, यो चिट्ठी टिचरले हजुरका लागि पठाउनुभएको हो ।

आमाले तुरुन्तै चिट्ठी पढिन् । चिट्ठी पढिसकेर उनी रुन थालिन् ।

आमा रोएको देखेर एडिसनले सोधे -‘आमा, चिट्ठीमा त्यस्तो के लेखेको छ ? हजुर त रुन पो थाल्नुभयो ।’

आमाले आँशु पुछ्दै भनिन्, ‘चिट्ठीमा लेखेको छ “तपाईंको छोरा अत्यन्तै बुद्धिमान् र प्रतिभाशाली छ । हाम्रो स्कुल तल्लो लेवलको हो र टिचरहरु पनि त्यति राम्रा छैनन् । त्यसैले हामी तपाईंको छोरालाई पढाउन सक्तैनौं । अब आफ्नो छोरालाई तपाईं आफैं पढाउनुस् ।” आफ्नो बयान सुनेर एडिसन धैरै खुशी भए ।

उनलाई आमाले घरमै पढाउन थालिन् । भनिन्छ नि, 'हरेक सफल व्यक्तिको पछाडि एउटी महिलाको हात हुन्छ । एडिसनका लागि ती महिला अरु कोही होइन, उनैकी आमा थिइन् ।

धैरै वर्षपछि उनकी आमाको निधन भयो । त्यसवेला सम्ममा विभिन्न किसिमका आविष्कारहरु गरेर एडिसन प्रख्यात वैज्ञानिक बनिसकेका थिए । एकपल्ट उनले केही खोज्ने क्रममा घरमा भएको दराजको एउटा कुनामा त्यो पुरानो चिट्ठी भेटे र उत्साहित हुँदै पढ्न थाले । चिट्ठी पढिसकेपछि उनी धैरै वेर रोइरहे । शिक्षकले उनकी आमालाई लेखेको त्यो चिट्ठीमा त्यस्तो के लेखेको रहेछ र उनी रोएका रैछन् त ?

त्यो चिट्ठीमा लेखिएको थियो -'तपाईंको बच्चा मन्दबुद्धिको छ । उसलाई अबदेखि स्कुल नपठाउनुस् । ऊ हाम्रो स्कुलमा पढ्ने लायकको छैन ।
एडिसनले रुँदै आफ्नो डायरी निकाले र लेखे-'एक महान् आमाले मन्दबुद्धि बच्चालाई शताब्दीकै महान् बैज्ञानिक बनाइ दिइन् ।'

अहिले लाई  यतिनै लेख्छु दिदी , पत्र पाएपछि अर्को पत्र लेखन नभुल्नु होला भन्दै यो पत्र बाट बिदा हुन्छ ।

उहीँ तपाईंको भाइ *भरत खत्री ,* दक्षिण कोरिया,

# सोन प्रियासंग एक दिन

## *निरज लवजु*

बुक स्टोरको सबभन्दा कुनामा रहेको ॅनेपाल स्टडी’ सेक्सनमा टाउको ठाडो पारेर आलमारीको सबभन्दा माथिल्लो तल्लामा राखिएका पुस्तक नियाल्दै गर्दा मैले उनलाई पहिलो पटक देखेको थिएँ । ॅनजिकको स्टुल तानेर त्यसमाथि चढेर हेरेको भए घाँटी त्यत्ति तन्काउनुपर्ने थिएन’, उनको चाला देखेर मेरो मनमा लागेको थियो । साँवलो वर्णकी उनले कुर्ता सलवार लगाएकी थिइन् । बायाँ कुममा झफ्ण्ड्याएको झफेलामा कुनै आदिबासी समुदायको मौलिक कला झफल्काउने चित्र छापिएको थियो । उनले बोकेजस्तो झफेला बजारमा साधारणतया पाइँदैन । त्यस्तो झफेला कारखानामा बनाइँदैन । कुनै आदिबासी समुदायका महिलाले घरमै बुनेको र कार्चोपी भरेको झफेला हुनुपर्छ त्यो । सम्भवतः कुनै स्थानीय उत्पादनको मेलामा किनेको हुनसक्छ ।

टाउको ठाडो पर्दै पुस्तक नियाल्दै गरेकी उनको घाँटी नराम्ररी तन्किएको थियो । तथापि, मसिनो सुनौलो लकेट चेनले उनको तन्किएको घाँटीको असहजता छोपिएको थियो । मलाई नजिक देखे पछि उनी मतिर हेरेर मुस्काइन् । अघिदेखि तन्किएको घाँटीलाई सम्भवतः त्यही बहानामा हल्का सजिलो भयो । साँवलो अनुहारमा सेता दन्तलहर देखाउँदै उनले भनिन्,“हेलो झ्”

खासमा म उनी उभिएको ठाउँबाट पारि जान खोजेको थिएँ । त्यसकारण उनलाई बेवास्ता गरेर जान सक्ने अवस्था मेरो थिएन । जवापफ्मा मैले भनें,“हाई झ्”

उनले हलुका आलमारीतिर टाँसिएर मलाई बाटो छोडिन् । म पनि अर्कोतिरको आलमारीतिर चेपिएर पारि गएँ । अनि पल्लो आलमारीका पुस्तकहरू नियाल्न थालें ।
मलाई लाग्यो, उनी नेपालको पूर्वी तराईको कुनै जिल्लाकी छात्रा हुनुपर्छ । अझफ् उनी पक्कै पनि समाजशास्त्र वा मानवशास्त्रकी विद्यार्थी हुनुपर्छ । किनभने सामान्यतः नेपाल सेक्सनमा तिनै विषयका विद्यार्थी वा अध्येता आलमारीका पेटारो पफ्काउँदै गरेका देख्छु ।

“एक्सक्युज मि, मे आइ डिस्टर्ब यु ?”, लिओ ई रोजले नेपालको राजनीतिक इतिहासबारे लेखेको पुस्तक सुमसुम्याउँदा गर्दा उनले मलाई ॅके म तिमीलाई डिस्टर्ब गर्न सक्छु’ भनेर सोधिन् । उनको स्वर उनको अनुहारबाट परावर्तित कोमलताभन्दा ठ्याक्कै नमिल्ने खालको थियो । सामान्यतः जसलाई हामी कोमल स्वर भन्छौं, त्यस्तो थिएन उनको स्वर ।

"एस झ् प्लिज", उनको अङ्ग्रेजी सम्बोधनको मैले पनि उही भाषामा प्रतित्रिफ्या जनाएँ–"अँ भन्नुस् ।"

"कुड यु प्लिज सजेस्ट मि सम बुक्स अन द चेन्जेज नेपाली सोसाइटी इन्काउन्टर्ड आपफ्टर अर्थक्वेक ?",भूकम्प पछि नेपाली समाजमा आएको परिवर्तनबारे केही पुस्तक भए नाम सिपफरिस गर्न उनको आग्रह पफ्रि पनि अङ्ग्रेजीमै सुन्दा मलाई उनी नेपाली होइनन् कि भन्ने मनमा लाग्यो ।

त्यो विषयमा बुक स्टोरको आलमारीमा कुनै पनि पुस्तक थिएन । त्यो विषयमा नेपाली भाषामा एकाध पुस्तक र केही अखबारी लेख त मैले पनि पढेको छु । तर, अङ्ग्रेजी भाषामा त्यो विषयमा लेखिएको कुनै पुस्तक प्रकाशन भएको मलाई पनि थाहा छैन । (मेरो अल्पजानकारीलाई धिक्कार छ ।) आलमारीमै भएको भए त उनले मलाई त्यो प्रश्न सोध्ने नै थिइनँ । त्यो विषयको अरू कुनै पुस्तकको तस्विर भफ्ट्टै मेरो दिमागमा आएन पनि । म विखलबण्डमा परें । अलि सम्भफ्ेंजस्तो निधार थोरै मुजा पारें ।

"अहँ मलाई त अहिले त्यो विषयमा लेखिएको कुनै पुस्तक याद भएन । काउन्टरमा गएर सोध्नु न । उनीहरूलाई थाहा हुन्छ", मैले भनें । (पाठक, यहाँबाट सबै संवादलाई नेपालीमै लेखें है ।)

उनी केही बेर उतै लागिन् । चार आलमारी परको काउन्टरमा अङ्ग्रेजीमै केही संवाद भएको सुनियो । कुराकानी मेरो कानमा ठोकिंदा के कुरा भयो, प्रष्ट भएन । पुस्तक पसलको एक जना सहयोगीसँगै उनी पफ्रि उही आलमारीमा आइन् । पसलेले केहीबेर यताउता हेऱ्यो । उफ् कुनै पुस्तक खोज्दै थियो । केही बेर खोजे पछि उसले पनि खोजेको पुस्तक नभेटाएकोमा अपफ्सोस पोख्यो ।

"भोलि आउनुस्, म खोजेर राख्छु । एउटा पुस्तक छ कि जस्तो लाग्या छ", पसलेले आपफ्नो टुत्रफ् ेअङ्ग्रेजीमा भने । अलि नमिठो मान्दै उनले भनिन्,"ओके ।"

दसैंको तलब आउनै बाँकी छ । त्यसकारण आज एकाध पुस्तकमै चित्त बुभफउनुपर्ने मलाई लाग्यो । टीआर वैद्यका दुई ठेली इतिहासका पुस्तक बोकेर काउन्टरमा गएँ । वैद्यका पुस्तक सरल भाषामा लेखिएको

हुनाले मलाई पढ्न सजिलो लाग्छ । पुस्तक भफेलामा राखेर ढोकामा राखेको स्यानिटाइजर डलेर बाहिर निस्कें । पार्किङमा राखेको मोटरसाइकल निकाल्दै गर्दा पछाडिबाट उही आवाज आयो,“के म तिमीसँग परिचय गर्न सक्छु ?”

मोटरसाइकल तान्दै गरेको म टक्क रोकिएँ र उनको कुरा सुनेर मुस्कुराउँदै भनें,“अवश्य । मेरो नाम ... । म पत्रकार हुँ ।”

“ओहो झ् ढुङ्गा खोज्दा देवतै भेटाएछु”, उनले अलि पफ्र्काउँदै भनिन् ।

म पिफ्स्स हाँसें ।

“म सोनप्रिया । भारतको पश्चिम बंगालबाट”,मेरो अघिको अनुमान ठ्याक्कै मिल्यो । उनी विदेशी नै रहिछन् ।

“के हामी चिया पिउन सक्छौं ?” उनको यो पफ्रासिलो प्रस्ताव सुनेर म अवाक् भएँ । जीवनमा धेरै जनालाई चिया र कपफ् ीजान मैले गरेको प्रस्तावलाई नालीमा मिल्काइदिएको तितफ्ता भएको मेरो मन एक जना परदेशी चेलीको यो प्रस्ताव सुनेर चकित पर्नेबाहेक अर्को के विकल्प छ र झ् म एक छिन अलमलमा परें । तर, सहृदयताको त्यो प्रस्तावलाई नाई भन्न सक्ने मेरो के हिम्मत झ्

“हुन्छ नि”, भन्दै मैले मोटरसाइकल अघिकै ठाउँमा पार्क गरें र नजिकैको चिया पसलको बेन्चीमा बस्यौं । खासमा त्यो एउटा सानो किचेन टेबुलमाथि ग्यासको चुल्हो राखेर चलाइएको पसल थियो । ग्यासमा पानी नपरोस् भनेर होला, किचेन टेबुलमाथि बाक्लो कार्टुनको छाना बनाइएको थियो । किचेन टेबुलको भित्री तख्तामा चिया, चियापट्टी र दुधका पोका राखिएका थिए । टेबुलमाथि नै बाँसको एउटा ¥याक राखिएको छ । त्यसमा चुरोट, खैनी, चकलेट, मास्क, सुकमेल, ल्वाङ, चाउचाउ र पानीका बोटल राखिएका थिए । वरपर दुई वटा बेन्ची थिए । बेन्चीमा दुई जनामात्र बस्न मिल्छ । तीन जना बस्न अलि असजिलो पर्छ । पसलमा सरकारी कार्यालयमा दर्ता चलानी गर्ने कर्मचारी र पफइल ओसार्ने पियनदेखि विद्यार्थीहरू, बटुवा, वरपरका पसलमा काम गर्ने मजदुरहरू आएर चिया चुरोट खान्छन् । सोनप्रिया र म एउटा खाली बेन्चीमा बस्यौं । मैले दुई वटा चिया अर्डर गरें ।

“तिम्रो समय लिएँ है मापफ् गर । खासमा म काठमाडौं पहिलो पटक आएको हुँ । म मेरो विश्वविद्यालयको शोधको निम्ति काठमाडौंमा आएको हुँ । सन् २०१५ को भुकम्प पछि नेपाली समाजमा के कस्तो परिवर्तन आयो भन्ने विषयमा शोध गर्न मेरो प्राध्यापकले मलाई सल्लाह दिनुभएको छ । त्यसैको स्रोत र सम्भाव्यताको खोजीको निम्ति म आएको हुँ । खोई, आज दिनभरको प्रयासबाट भने मैले विषय परिवर्तन गर्नुपर्छ कि जस्तो लागिरहेको छ”, उनले भनिन् ।

म उनको कुरा सुनिरहें । जिन्समाथि कुर्ता, अनि स्पोर्ट्स सुज, हातमा डिजिटल घडी, घाँटीमा मसिनो लकेट चेन । कुरा सुन्दै मैले उनलाई ध्यानपूर्वक नियालें । उनको कुरा र लवाइबाट मैले उनी सत्रिफ्य स्वभावकी केटी हुनुपर्ने अनुमान गरें । उनको अङ्ग्रेजीको धारा प्रवाह मैले अनुभव गरिसकेको थिएँ । आपफ््नो त अङ्ग्रेजी नै खराब झ् अङ्ग्रेजी बोल्न नजानेर जीवनमा धेरै दुःख पाएको छु, धेरै अवसर गुमाएको छु । कतै त अपमानित समेत पनि । त्यसैले सोनप्रियासँग लामो समय कुरा गर्न नसकिने कुरा मनमा खेलिसकेको थियो । अङ्ग्रेजी साहित्यको विद्यार्थी भएर पनि बोल्न नजान्दा मेरो जस्तो कन्तबिजोग त शत्रुले पनि भोग्न नपरोस् । तै पनि टुत्रफ् ेअङ्ग्रेजी जिन्दावाद झ्

(पाठक, मैले अङ्ग्रेजी संवाद पनि नेपालीमा लेख्ने भन्नु पछाडिको चलाखी त बुभफ््नुभयो नि झ्)

“तपाईंसँग भेट्दा खुशी लाग्यो । भारतको कुन विश्वविद्यालयमा पढ्नुभएको ?”

“जेएनयु, नाम सुन्नुभएको होला नि ।”

“किन नसुन्नु । नेपालमा सबभन्दा चर्चित भारतीय विश्वविद्यालय नै जेएनयु हो ।”

उनी मुसुक्क हासिनँ । चिया आयो । दुध चिया । पसलेले चुरोटको बट्टा पनि लिएर आयो । थालमा ल्याएको चिया लियौं । थालमा पोखिएको चिया यताउता दौडिरहेको थियो । ट्चुरोट पर्दैन’ भन्यौं ।

चिया सुर्काउँदै सोनप्रियाले सोधिन्,“जेएनयु किन चर्चित त ?”

“नेपालको राजनीतिमा जेएनयुको बेलाबेला चर्चा हुने गर्छ । कहिले एसडी मुनीसँग जोडिएर त कहिले बाबुराम भट्टराईसँग जोडिएर”, टुत्रफ् ेअङ्ग्रेजीमा मैले उनलाई प्रष्ट पार्न खोजें ।

उनी टाउको हल्लाउँदै चिया रित्याउनतिर लागिन् ।

“पछिल्लो समय जेएनयुको विद्यार्थी राजनीतिबारे पनि नेपालमा बेलाबेला चर्चा हुने गरेको छ । विद्यार्थी नेताहरूमाथिको दमन, धरपक्कड र मोदी सरकारको हिन्दु पफसीवादी गतिविधिको विरोधमा भएका सङ्घर्षबारे नेपालका साना तर वैचारिक रूपमा प्रष्ट पत्रपत्रिकाले लेख्ने गरेका छन्”, मेरा शब्दहरू नसकिंदै सोनप्रियाको अनुहारमा पफ्रक कान्ति छाएको अनुभव भयो ।

“साँच्चै झ्”, उनले अघिभन्दा अलि चर्को स्वरमा भनिन् । चियाको अन्तिम घुट्को निल्दै मैले टाउको हल्लाएँ ।

“तर, तिमी यो कुरा सुनेर किन यति उत्साहित ?”, मैले मेलोमेसो नपाएर सोधें ।

सोनप्रिया मुस्काइन् । उल्टै मलाई सोधिन्,“तिमी कुनै राजनीतिक विचारसँग नजिक छौ ?”

उनको प्रश्नले मलाई असहज अनुभव भयो । सामान्यतः नेपालीले यही आशयको प्रश्न सोधेको भए उसले सोध्ने थियो,“तिमी कुनै पार्टीमा लागेका छौ ?’ तर, सोनप्रियाको प्रश्न पफ्रक खालको थियो ।

कुरा यति चाँडै यो गहिराईमा पुग्ने मैले अनुमान पनि गरेको थिइनँ ।

“म कुनै बेला एउटा वामपन्थी विद्यार्थी संगठनको सदस्य थिएँ । विश्वविद्यालयको पढाइ पछि म पत्रकारितामा लागें”, मैले भनें ।

“त्यसो भए तिमी ॅकमरेड’ हौ झ्”,उनले भनिन् ।

मैले अलि संकोच मानेर भनें । ॅकमरेड’ शब्द ज्यादै प्यारो शब्द हो । तर, नेपालमा त्यो जसले पनि लगाउने आकार बिग्रेको टोपी जस्तै बनिसकेको छ । त्यही भएर कतिबेला कमरेड भन्दा पनि संकोच लाग्छ । खासमा त्यसो नहुनुपर्ने हो ।

“अँ एकप्रकारले”,मैले भनें ।

“लौ नेपालमा आएर कमरेड पाउँदा खुशी लाग्यो । म जेएनयुको त्रफन्तिकारी विद्यार्थी संगठनको सचिव हुँ । तिमीले भनेका आन्दोलनको एक जना गौरवान्वित सदस्य म पनि हुँ”, सोनप्रियाले भनिन् ।

मेरो मनमा पनि महत्वपूर्ण मान्छेसँगै भेटेको रहेछु भन्ने गौरवभाव दौडियो ।

सोनप्रियालाई चियाको धित मरेको रहेनछ । अर्को एक–एक कप चिया खाने कुरा भयो । यो पटक भने मैले कालो चिया मगाएँ । उही ग्यास्ट्रिकको कारण ।

“मेरो परिवार वामपन्थी पृष्ठभूमिको हो । आमा र बुवा दुवै कम्युनिस्ट पार्टीका सदस्य हुनुहुन्थ्यो । सन् १९७५ सम्म भफेला बोकेरै हिंड्नुहुन्थ्यो रे । तर, पछि कम्युनिस्ट आन्दोलनमा आएको विभाजन पछि सत्रिफ्य गतिविधि त्याग्नु भएछ । यद्यपि, वामपन्थी साहित्यको लेखन, अध्ययन, अनुवाद र प्रकाशनमा लगातार लाग्नुभयो । स्तालिनको विषयमा पार्टीभित्र मतान्तर भए पछि पार्टीको औपचारिक सदस्यता त्याग्नुभएछ । बुवा–आमा स्तालिनको योगदानलाई न्युनाङ्ढन गर्न नहुने पक्षमा हुनुहुन्थ्यो, पार्टीले स्तालिनबाट गल्ती भएको भनेर पश्चिमा र संशोधनवादी प्रचारकै पछि लागे पछि उहाँहरू बाहिरिनुभएछ । बुवा त अहिले स्तालिन सोसाइटीको सदस्य पनि हुनुहुन्छ । आमा सांस्कृतिक पफँटबाट पार्टीमा सामेल हुनुभएको । धेरै पछिसम्म अभिनय गर्नुहुन्थ्यो । अहिले त उमेरले पनि गाह्रो छ । तर, कविता र नाटक लेखन, सम्पादन र अनुवाद गर्नुहुन्छ”, सोनप्रियाले म पनि ॅकमरेड’ भएको निश्चय भए पछि विश्वासपूर्वक कुरा भनिन् ।

(कति सम्बन्ध दुई कप चियाको अन्तरालमै कति गहिरो हुने रहेछ है ।)

मलाई कीर्तिपुर जानु थियो । सिनास पुगेर केही पुराना किताब लिनुथियो । गोविन्द भट्टले चीनको राजनीतिक व्यवस्थाबारे लेख्नुभएको एउटा पुरानो किताब चाहिएको थियो ।

"त्यसो भए तिमी पनि कमरेड झ्" मैले जिस्क्दैँ सोनप्रियालाई भनें ।

उनले मतिर हात बढाइन् । मैले पनि हात बढाएँ । कस्सिलो गरी हात जोडियो । "लौ अब स्यानिटाइजर लगाऔं", भफेलामा भफण्ड्युाइएको स्यानिटाइजरको बिर्को खोल्दै उनले भनिन् । स्यानिटाइजर लगाएर हामीले हात रगट्यौं ।

कुरा गर्न अभफ् धेरै बाँकी छ कि जस्तो लाग्दैथियो, सम्भवतः दुवैलाई । कोही पुरानो मिल्ने मान्छे भेट्दा हुन्छ नि त्यस्तो ।

मैले आपफ् ुकीर्तिपुर जान लागेको बताएँ । उनले पनि आजलाई अरू कुनै काम नभएकोले विश्वविद्यालय हेर्न जाने बताइन् । मोटरसाइकलमा कालीमाटी हुँदै कीर्तिपुर लाग्यौं । विश्वविद्यालय भफण्डै सुनसान थियो । सेमेस्टर प्रणाली लागु हुँदादेखि त्रिवि मलाई कसो कसो शुन्य शुन्य लाग्छ । पहिला हाटबजार जस्तो लाग्ने त्रिवि हिजोआज नेपाल बन्द हुँदाको सडक जस्तै लाग्छ ।

विश्वविद्यालयका पुस्तक पसलमा केही, कमर्श विभागअघिको चिया पसलमा केही, पुस्तक पसल पछाडिको चमेनागृहमा केहीबाहेक सडकमा मान्छे नै कोही थिएन । घण्टाघर भवनअघिको बगैंचामा हालसालै राखिएका पफ्लामका बेन्चीमा एक जोडी प्रेमीप्रेमिका वरपरको पर्वाह नगरी मस्त गपिफ्दैं थिए ।

मोटरसाइकल सिधैं सिनास भवनअघि रोकें । सोनप्रिया मोटरसाइकलबाट उत्रेर वरपर निकै उत्सुकताका साथ हेरिरहेकी थिइन् ।

"कस्तो लाग्यो त हाम्रो विश्वविद्यालय ?", मैले अलि व्यङ्ग्य मिसाएर सोधें ।

"राम्रो लाग्यो", उनले सहृदयता प्रदर्शन गरिन् ।

"जेएनयु जस्तो त राम्रो छैन है", जेएनयुबारे पढेका केही कुराको आधारमा मैले भनें ।

"विश्वविद्यालयको मूल्याङ्ढन भवन हेरेर मात्र गरिन्न । यहाँको प्राज्ञिक गतिविधि कस्तो छ, मलाई थाहा छैन । तर, तिमी जस्तो असल मान्छे बनाउने विश्वविद्यालय पक्कै राम्रो हुनुपर्छ", बङ्गालीहरू क्या मज्जाले बोल्छन् है । मख्खै म त ।

सिनासको पुस्तक भण्डारमा ताला लगाइएको थियो । पियनलाई सोध्दा पुस्तकको जिम्मेवार व्यत्तिफ् बिदामा बसेको बताइयो । त्यस्तो अवस्थामा म जस्तो मान्छेसँग एउटै विकल्प हुन्छ–पर्फिकने । सोनप्रियालाई संकोच मान्दै त्यही कुरा बताएँ । उनले कति पनि अप्ठ्यारो नमानी भनिन्,"यो त भारतको पनि समस्या हो नि ।"

सिनासबाट पर्फिकएर केही बेर विश्वविद्यालयका विभागहरू घुम्यौं । कोरोना महामारीलाई ध्यानमा राखेर पुस्तकालयमा परिचय पत्रधारी विद्यार्थीलाई पुस्तक साट्न मात्र खुला गरिएको थियो । हामीलाई त्यो सुविधा प्राप्त भएन । पुस्तकालयअघिको जाकिर हुस्सेन बगैंचामा केही माली महिलाहरू टाउकोमा खास्टोले छोपेर घाँस उखेल्दै थिए ।

सोनप्रियाले त्रिवि केन्द्रीय क्याम्पसको स्ववियु कार्यालय भवन हेर्ने चाहना पोखिन् । तर, भफ्ण्डै एक दसकअघि जलेको स्ववियु भवनको भग्नावशेषमात्र देखाएँ ।

“नेपालको विद्यार्थी आन्दोलनको अवस्था अहिले कमजोर छ । विश्वविद्यालय र क्याम्पसमा स्ववियु चुनाव नभएको पनि आधा दसक भइसकेको छ । विद्यार्थी र जनजीविकाका मुद्दा तथा राजनीतिक विषयमा विद्यार्थीहरूको सत्रिफ्यता कमजोर नै देख्छु अथवा कम्तीमा पहिले जस्तो छैन”, घण्टाघर भवनबाट तल ओर्लिदै गर्दा मैले सोनप्रियालाई भनें । उनले आपफ््नो भफेला कुम पफ्र्देै टाउको हल्लाइन् ।

“खासमा मोदी सरकारले पनि भारतीय विद्यार्थी आन्दोलनलाई कमजोर बनाउन सबै सम्भव प्रयास गरिरहेको छ । विशेषतः हिन्दुवादी अतिवादीहरू कुनै न कुनै बहाना र निहुँमा वामपन्थी विद्यार्थीलाई दबाउने काम गरिरहेका छन् । जेएनयुमा पनि धेरै साथीहरू उनीहरूको कोपभाजनमा परे । भिजिलान्तेहरू प्रयोग गरेर छात्रावासमै पटक–पटक हमला भयो । प्रहरी प्रशासनले पनि हिन्दु अतिवादीहरूलाई नै साथ दिइरहेका छन् । प्रहरीको हुलबीचमा हिन्दुअतिवादीहरू आएर विद्यार्थीहरूमाथि मारपिट गरिरहेका छन् । यद्यपि, भारतका विद्यार्थीहरू लड्न छोडेका छैनन् । जति दमन हुन्छ, त्यत्ति नै प्रतिरोधका गतिविधि भइरहेका छन्”, सोनप्रियाले यति भन्दै गर्दा हामी पुस्तक पसल पछाडिको चमेना गृहमा पुगिसकेका थियौं । मैले दुई वटा समोसा र एक प्लेट पकौडा मगाएँ । सोनप्रियाले अघिको चिया सम्भफ्दैं चिया पनि मगाउन भनिन् । पफ्रेि एक कप दुधको र अर्को एक कप कालो चियाको माग थपियो ।

सोनप्रियाको अनुहार अलि थकित देखिन्थ्यो । उनी अनामनगरको एउटा होटेलमा बसेकी रहिछन् । यो पटक एक हप्ता मात्र काठमाडौं बस्ने योजना रहेछ । भूकम्पले धेरै क्षति पुर्‍याएको ठाउँको बासिन्दा हुनुको नाताले उनको शोधमा मैले पनि केही सहयोग गर्ने वाचा गरें । त्यसको निम्ति पर्सी पफ्रेि बुक स्टोरमै भेट्ने टुङ्गो लाग्यो । चिया खाँदै गर्दा आधा घण्टाजति दर्केर पानी पर्‍यो । दिउँसोका चर्को गर्मीबाट अलि त्राण पाएको अनुभव भयो । कीर्तिपुरमा साँभफ्को चिसो हावा चल्न थालिसकेको थियो । बाइकमा दुवै जना कीर्तिपुरबाट पर्फिकरहँदा मलाई कोही प्रिय मान्छेसँग दिनभर समय व्यतीत गरेको भान भयो ।

# चिया

*भरत खत्री*

चिनी नभए पनि सापटी माघेर ल्याउ जस्तो लाग्छ, उधारोमै भए पनि खाउ जस्तो लाग्छ । यत्रतत्र सवत्र पाइने बाटोमा हिड्ने बटुवा देखि महलमा बस्ने महलपतीहरु लाई सम्म चाहिने ।

उतिकै शर्वशुल्भ महगोमा महङ्गो सस्तोमा सस्तो । एकमुठी चिया बिहानको अमृत नास्तामा चिया खानामा चिया, हुक्कामा चिया, सभासमारह चिया मर्दा चिया पर्दा चिया । यस्तो लाग्छ चिया सङ जुनिजुनी देखिको सम्बन्ध थियो । निकै गाढा माया थियो त्यसैले यो जुनिमा पनि सङै बस्न चाहान्छ सुपर गूलु बनेर, चुम्बक बनेर नजिक धेरै नजिक ।

आकार अनि प्रकार पनि भिन्न भिन्नै कपमा कप जस्तै, गिलासमा गिलास जस्तै, कचौरोमा कचौरो जस्तै, । थरीथरीका चिया फिक्का चिया दूध हालेको सेतो चिया, दूध नहालेको कालो चिया, कसैकसैले रातो चिया नि भन्ने अनि कतै गोरुमुते चिया । आफ्नो आफ्नो व्याख्या र विश्लेषण गरेका छन् । गाउँ पिच्छे, सहर पिच्छे देश पिच्छे । अज अलि पढेलेखेका नेपाली मुलुकका अङ्ग्रेजहरुले अङ्ग्रेजीमा ब्याक टि, मिल्क टि , ग्रीन टि लेमन टि भनेर नामाकरण गरेका छन् ।

कुनै कुनै पसलका ग्राहक र साहु लेमन टि र लेबनटी मा झुकिन्छन । चियाको विकसित रुप यहाँ मात्र रोकिदैन यसको विकास भव्य भएको छ, चिया पछि कफि आउँछ यो देख्दा लाग्छ कफि भन्दा पहिले चिया आयो । पछि विकसित भएर कफिमा नामाकरण गरियो । खैर जे सुकै होस् । चिया सङ सबैको प्रेम बसेको छ, वृद्ध बुवाआमा देखी सानो बच्चाहरुलाइ चिया नभै हुन्न । फ्री र उपहार बाट सुरु भएर यसको मुल्य बढ्दै जान्छ ५ रुपैया १० रुपैयाँ २० रुपैया ५० रुपैया ।

ठेलामा बनाएको चिया कुनै पुरानो गल्लीको बाटोमा बसेर पियो भने पुट्पातको चिया भनेर चिनिन्छ, सहरको महँगो होटल अथवा रेस्टुरेन्टमा बसेर पियो भने टि भनेर चिनिन्छ । चियाको लत यसरी लाग्छ कि ।

रोग लागेर डाक्टरले गुलियो नखानु भनेर सुझाव दियो भने पनि हल्का चिने हालेर पिउछ्न, त्यो पनि भएन भने चियापत्ती मात्र राखेर पिउछ्न, कसै कसैले चिने नभए नुन हालेर नुलिलो चिया पिउछ्न, कसैले चियापत्ती नभएर चिनी डडाएर कालो रङ बनाएर चिया पिउछ्न । चियालाइ आधुनिक र आकर्षक बनाउन लङ्ग अलेची सुनकौलिका पात अनि अदुवा तथा मरिच राख्छन् । भारतमा बसेर नेपाल फर्किएका नेपालीहरुले कडक पति तेज राख्नु है भन्छन् । चिया हरेक खाना सङ्ग खान मिल्छ त्यहीँ भएर दुन्ट सङ्ग, पाउरोटी सङ्ग, रोटी सङ्ग , मकै सङ्ग अझ भएन भनेर कसै कसैले भात सङ्ग नि चिया खान्छन् । अरुबेला खल्ती बाट पैसा निकाल्न कोहि खोज्दैन्न तर चियाको पैसा तिर्न धेरै जसो अघि सर्छन । जुरुक्क उठने बितिकै वो फलानो चिया बना त भन्छन्, नभए आफै भान्सामा पसेर चिया बनाएर पिउछ्न अनि अरु काम सुरु गर्छन् । कसैको चिया सङ्ग घनिष्ट मित्रता हुन्छ यसतो लाग्छ चिया बिना उनिहरु बाच्दैन्न अनि उनीहरु बिना चिया । चियाको यसरी वर्णन गर्छन् कि चिया उनिहरुको शरिरको कुनै अङ्ग हो । त्यो बिना उनिहरुको शरीर अपुरो छ ।

बिबाहको लागि केटी हेर्न गयो भने चिया सङ्गै बेहुली पठाउने चलन पनि छ , साथीभाइ बसेर गफ गर्दा चियाको तालमा हुन्छन् एक फेर झुरुप्प पार्दै बोल्छन्, चुरोट खानेहरु एक पप चुरोट अनि झुरुप्प चिया पार्छन् , लाग्छ चिया सबै भन्दा बलवान् छ । जस्तो सुकै गर्मीमा नि चियाको माग घट्दैन अनि जस्तो सुकै चिसोमा नि चियाको माग घट्दैन । चिया निकै लोकप्रिय पेए पदार्थ बनेको छ ।

प्याटुले दाइको घरमा लोग्ने स्वास्नीको झगडा परेछ । स्वास्नीले पुलिस केस गरिछन र माइत गएर बसिछन । प्रहरी चौकी बाट प्याटुले दाइलाई प्रहरीले ११ गते जसरी नि हाजिर हुनु भनेर खबर पठाएछ । रिचार्जकार्ड किन्न गएका दाइको भेट प्रकास खत्री सङ्ग भएछ । खत्रीले सोध्न लागेछन "दाइ तपाईको घरमा झगडा परेको होर" भनेर भन्न नपाउदै । प्याटुले दाइले भनेछन् भाइ ...जस्तो सुकै गर्मी भए नि, चिसोले हातखुट्टा नचले पनि, आगोमै बसे पनि, हिउँ मै बसे पनि, हावामै उडे पनि अरु केही कुराको लत छैन ...तैपनि दिनमा आठ नौ कप चिया चाहिने जोकर्ने मज्जाले खाइन्छ ।

# अब्दुलराजक गुर्न: साहित्यमा नोबेल पुरस्कार

Rukesh Machamasi



**तान्जानियाली लेखक, टोनी मोरिसन पछि पहिलो अश्वेत विजेता, उनको "औपनिवेशिकताको प्रभावहरूको असंगत र दयालु प्रवेश" को लागी सम्मानित गरियो।**

तान्जानियाको तटमा एक द्वीप समूह, जान्जिबारमा हुर्केका, अब्दुलराजाक संभावनाको बारेमा कहिल्यै सोचेनन् कि उनी एक दिन एक लेखक हुन सक्छन्। उनले एक अन्तर्वार्तामा भनेका छन्, 'यो मेरो दिमागमा कहिल्यै आएन । "तपाईले हुर्कदै गर्दा भन्न सक्नुहुने कुरा थिएन, 'म लेखक बन्न चाहन्छु।'" उनले सोचेका थिए कि उनी "इन्जिनियर जस्तै उपयोगी चीज" बन्नेछन्। त्यसपछि, 1964 मा, एक हिंसक विद्रोहले गुर्नह, जब उनी 18 वर्षको थिए, इङ्गल्याण्ड भाग्न बाध्य भयो। दुःखी, गरिब, घरपरिवार, उनले आफ्नो डायरीमा घरको बारेमा स्क्र्यापहरू लेख्न थाले, त्यसपछि लामो प्रविष्टिहरू, त्यसपछि अरू मानिसहरूका कथाहरू। ती छरिएका प्रतिबिम्बहरू, उसको आफ्नै विस्थापनलाई बुझ्न र दस्तावेज गर्ने लेख्ने बानीले अन्ततः उनको पहिलो उपन्यास, त्यसपछि थप नौ उपन्यासहरू - औपनिवेशिकता, युद्ध र विस्थापनको लामो आघात अन्वेषण गर्ने कार्यहरू जन्मायो। "मेरो लागि लेखनको सम्पूर्ण अनुभवलाई उत्प्रेरित गर्ने कुरा संसारमा आफ्नो स्थान गुमाउने विचार थियो," उनले भने। गुर्नह, 72, 1993 मा टोनी मोरिसन पछि पुरस्कार प्राप्त गर्ने पहिलो अश्वेत लेखक हुन्, र केही पर्यवेक्षकहरूले युरोपेली र अमेरिकी नोबेल पुरस्कार विजेताहरूको वर्षौं पछि उनको चयनलाई लामो समयदेखि अपेक्षित सुधारको रूपमा हेरे।

यस वर्षको पुरस्कारको दौडमा चर्को अनुमानको बीचमा, साहित्य पुरस्कार यसका विजेताहरूमा विविधता नभएको कारण बोलाइएको थियो। उनका १० उपन्यासहरुमा, गुर्नाहले प्राय: निर्वासन, पहिचान र सम्बद्धताको विषयहरुको अन्वेषण गरेका छन्। तिनीहरूमा "मेमोरी अफ डिपार्चर", "पिलग्रिम्स वे" र "डॉटी" समावेश छन्, जुन सबै बेलायतमा आप्रवासी अनुभवसँग सम्बन्धित छन्; "स्वर्ग"1994 ४ मा बुकर पुरस्कार को लागी छोटो सूचीकृत, एक पूर्व अफ्रिकी देश का एक केटाको बारेमा उपनिवेशवाद द्वारा प्रभावित; र "मौनताको प्रशंसा गर्दै", जान्जिबार छोडेर इङ्गल्याण्ड जाने युवकको बारेमा, जहाँ उसले बिहे गरेर शिक्षक बन्छ। उनको सबैभन्दा भर्खरको काम, "आफ्टरलाइभ्स" ले तान्जानियामा जर्मन उपनिवेशवादको पुस्तागत प्रभावहरू र यसले समुदायहरूलाई कसरी विभाजित गर्यो भनेर अन्वेषण गर्दछ।

पुरस्कार प्रदान गर्ने समितिका अध्यक्ष एन्डर्स ओल्सनले बिहीबारको पत्रकार सम्मेलनमा गुर्नहलाई "विश्वका प्रख्यात उत्तर-औपनिवेशिक लेखकहरूमध्ये एकको रूपमा व्यापक रूपमा चिनिन्छ।" गुर्नहले "पूर्व अफ्रिकामा औपनिवेशिकताको प्रभाव र उखेलिएका र बसाइँसराइएका व्यक्तिहरूको जीवनमा यसको प्रभावलाई निरन्तर र ठूलो करुणाका साथ घुसाएका छन्," उनले थपे। गुर्नहको नोबेलको खबर सँगी उपन्यासकारहरू र शिक्षाविद्हरूद्वारा मनाइयो जसले लामो समयदेखि तर्क गरेका थिए कि उनको काम व्यापक दर्शकहरूको योग्य छ।उपन्यासकार माजा मेन्गिस्टले आफ्नो गद्यलाई "बिस्तारै भित्र पसिरहेको कोमल ब्लेड जस्तै" भनेर वर्णन गरे। "उनका वाक्यहरू भ्रामक रूपमा नरम छन्, तर मेरो लागि संचयी बल स्लेजहयामर जस्तो लाग्यो," उनले भनिन्।"उनले काम लेखेका छन् जुन पूर्णतया अविचलित छ र अझै एकै समयमा पूर्व अफ्रिकाका मानिसहरूका लागि पूर्ण रूपमा दयालु र हृदयले भरिएको छ," मेन्गिस्टेले भने। "उहाँ कथाहरू लेख्दै हुनुहुन्छ जुन प्रायः सुनेका मानिसहरूका शान्त कथाहरू हुन्, तर त्यहाँ हामीले सुन्ने जिद्दी छ।"लौरा विन्टर्सले 1996 मा द न्यु योर्क टाइम्समा लेखेका थिए, "प्याराडाइज" लाई "एक चम्किलो, तिरछा आगमनको कथा" भनिन्, "एडमिरिङ साइलेन्स" एउटा काम थियो जसले "दुई बीचमा समातिएको मानिसको पीडालाई कुशलतापूर्वक चित्रण गर्दछ। संस्कृतिहरू, जसमध्ये प्रत्येकले उसलाई अर्कोसँगको सम्बन्धको लागि अस्वीकार गर्नेछ।"तर लेखक गिल्स फोडेनले "अफ्रिकाका सबैभन्दा ठूलो जीवित लेखकहरू मध्ये एक" भनेर प्रशंसा गरे तापनि, गुर्नहका पुस्तकहरूले विरलै केही अघिल्लो पुरस्कार विजेताहरूले गरेको जस्तो व्यावसायिक स्वागत पाएका छन्।नाइजेरियाको एके आर्ट्स एण्ड बुक फेस्टिभलका निर्देशक लोला शोनेइनले नोबेल पुरस्कारले अफ्रिकी महाद्वीपमा गुरनाहका लागि ठूलो दर्शकलाई आकर्षित गर्ने आशा गरेकी थिइन्, जहाँ उनको काम धेरै व्यापक रूपमा परिचित छैन, र उनले उनको ऐतिहासिक कथालाई आशा गरेकी छिन्। युवा पुस्तालाई आफ्नो देशको विगतमा अझ गहिरो रूपमा चिन्तन गर्न प्रेरित गर्न सक्छ।"यदि हामीले विगतमा के भएको छ भनेर धेरै सक्रिय र जानाजानी हेरिरहेका छैनौं भने, हामी कसरी महाद्वीपमा आफ्नो लागि सफल भविष्य बनाउन सक्छौं?" उनले भनिन्।

गुर्नहको जन्म जान्जिबारमा भएको थियो, जुन अहिले तान्जानियाको हिस्सा हो, सन् १९४८ मा भएको थियो। इङ्गल्याण्ड गएपछि उनले २० वर्षको उमेरमा कथा लेख्न थाले। उनले आफ्नो पहिलो उपन्यास, "मेमोरी अफ डिपार्चर" समाप्त गरे, असफल विद्रोहबाट भाग्ने एक युवाको बारेमा, त्यही समयमा उनले आफ्नो पीएच.डी. शोध प्रबंध। उनी क्यान्टरबरीको केन्ट विश्वविद्यालयमा अङ्ग्रेजी र उत्तर-औपनिवेशिक साहित्यका प्रोफेसर भए, सोयिन्का, न्ग्यु वा थिओङ्गो र सलमान रुस्दी जस्ता लेखकहरूको काम सिकाउँदै।

आफ्नो विद्वान् कार्य र आफ्नो कथा दुवैमा, गुर्नहले "उपनिवेशवादले संसारमा सबै कुरालाई कसरी परिवर्तन गर्यो, र यसबाट बाँचिरहेका मानिसहरू अझै पनि त्यो अनुभव र यसका केही घाउहरू प्रशोधन गरिरहेका छन्," उनले भने। आफ्नो करियरको सुरुमा उसलाई ओगटेका एउटै विषयवस्तुहरू, जब उनी आफ्नै विस्थापनका प्रभावहरू प्रशोधन गर्दै थिए, आज पनि उत्तिकै जरुरी महसुस गर्दछन्, उनले भने, युरोप र अमेरिका दुबै आप्रवासी र शरणार्थीहरू विरुद्धको प्रतिक्रिया र राजनीतिक अस्थिरता र राजनीतिक अस्थिरताको साथ ग्रसित छन्। युद्धले आफ्नो देशबाट धेरै मानिसहरूलाई धकेलेको छ। "यो यी समृद्ध देशहरूको तर्फबाट एक प्रकारको नीचता र कंजूषता हो जसले भन्छ, हामी यी मानिसहरू चाहँदैनौं," उनले भने। "उनीहरूले युरोपेली आप्रवासीको तुलनामा यी शाब्दिक रूपमा मुट्ठीभर मानिसहरू पाउँदैछन्।" यद्यपि गुर्नह किशोरावस्थादेखि तान्जानियामा बसेका छैनन्, देशले उहाँलाई प्रेरणा दिइरहेको छ। उनले जानाजानी आफ्ना कथाहरू अन्यत्र सेट गर्न खोज्दा पनि आफ्नो मातृभूमिले सधैं आफ्नो कल्पनामा आफूलाई दाबी गर्ने बताए। "तपाईँ कुनै ठाउँको बारेमा लेख्न त्यहाँ हुनुपर्दैन," उनले भने। "यो सबै तपाइँको सबै चीजको फाइबरमा छ।"



